# नेपालको बौद्धधर्ममा अष्टमीव्रत

# Astami – Vrata in Buddhism of Nepal



दिवंगत पूज्य चन्द्रदेवी धाख्वाको वार्षिक पुण्यतिथिमा प्रकाशित

प्रकाशक
आशारत्न धाख्वा

लेखिका
डा. रञ्जना वज्राचार्य

*प्रकाशक*

**आशारत्न धाख्वा,**

**नागबहाल, ललितपुर, नेपाल**

*प्रथम संस्करण*

ने.सं. ११२० गुँलाथ्व, मतया

बु.सं. २५४४

बि.सं. २०५७

ई.सं. २०००



*आवरण*

**ललितपुरस्थित हिरण्यवर्ण महाविहारको धर्मागार गुम्बामा प्रष्ठापित श्रीअमोघपाश लोकेश्वर**

*मुद्रक : सुभाष प्रिन्टिङ प्रेस, नकबहिल, ललितपुर फोन न. ५३३१९१, टाइप सेटिङ : विनोद महर्जन*

# श्रीअमोघपाश लोकेश्वर स्तुति

॥ नमः श्री अमोशपाश लोकेश्वराय ॥

ॐ झटिति सर्वसत्वोद्धरण हेतो ह्रींकारेण ।

श्रीमत्अमोघपाश लोकेश्वर मात्मा नं भावतयेत् ॥

शुद्धं कुण्डेन्दु तुषारभा सदृभं पद्मेवरेसस्थितं ।

सर्वज्ञं विद्धान मा भयहरं श्रीपाश जापोतमम् ॥

वामेनापि कमण्डलं च कमलं दण्डोत्तमं पुस्तकं ।

वन्देऽहं परमेश्वरं तु शिरसा लोकानुकम्पामयम् ॥

# समर्पण

जन्म मिति
१९८५ श्रावण
३० गते
(अनाला)



दिवंगत मिति
२०५६ श्रावण
१२ गते
मतया, (अनाला)

परम पूजनीया प्रातः स्मरणीया माता

**चन्द्रदेवी धाख्वाको**

पुण्य स्मृतिमा समर्पित

छोरी

**रञ्जना धाख्वा वज्राचार्य**

# चित्रफलक-सूची

# रेखात्मक चित्र-सूची

# विषय-सूची

टेलिफोन नं : [illegible]

# त्रिभुवन विश्वविद्यालय

**नेपाली इतिहास, संस्कृति तथा पुरातत्व केन्द्रीय विभाग**





कीर्तिपुर
काठमाडौं, नेपाल ।

प.सं.
च.नं.

मिति: ..................

# मन्तव्य

सह प्रा. डा. रञ्जना वज्राचार्यज्यूले तयार पार्नु भएको "नेपालको बौद्धधर्ममा अष्टमीव्रत" ग्रन्थ पढ्ने अवसर पाएकोमा मलाई अत्यन्त खुशी लागेको छ । नेपाल तथागत बुद्धको जन्मभूमि भएतापनि यहाँ बौद्धधर्म सम्वन्धी कतिपय कुराहरु अझै अज्ञानतामै छन् । त्यसमा पनि नेपालको बौद्धधर्ममा व्रत र उपावासको कस्तो स्थान छ, ती व्रतहरु धारण गर्दा के कस्ता कुराहरुको पालना हुनुपर्छ जस्ता सन्दर्भहरु कतिपय अर्थमा अप्राप्य नै रहेका अवस्थामा **"नेपालको बौद्धधर्ममा अष्टमीव्रत"** नामक ग्रन्थ लेखिनु र प्रकाशित हुनु नेपाल र नेपालीका साथै बौद्धधर्मप्रति चासो राख्ने सवैका लागि यो महत्त्वपूर्ण कार्य भएको कुरा मैले ठानेको छु । यसरी डा. वज्राचार्य ज्यूले महत्त्वपूर्ण कृति लेख्नु भई प्रकाशमा ल्याउनु भएकोमा उहाँलाई म हृदयदेखि नै धन्यवाद दिन्छु म हृदयदेखि नै धन्यवाद दिन्छु । भविष्यमा उहाँबाट अझै यस्तै ग्रन्थहरु प्रकाशित होला भन्ने बारेमा म पूर्ण विश्वस्त छु ।

साथै यस कृतिले बौद्धधर्ममा अष्टमीव्रतको विषयलाई मात्र प्रकाशमा नल्याएर स्नातकतह र अन्यतहका अध्ययनरत विद्यार्थीहरुका लागि ज्ञान प्रदान हुने कुरामा म विश्वस्त छु । डा. वज्राचार्यज्यूलाई यस गहन अनुसन्धानतमक कार्य तथा प्रकाशनको लागि म हृदयदेखि नै साधुवाद दिन्छु ।

*दिनाङ्क- २०५७, ४, १३*

रामनिवास पाण्डेय

**राम निवास पाण्डेय्**

*अध्यक्ष*

**नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विभाग**

त्रिभुवन विश्वविद्यालय

कीर्तिपुर, काठमाडौं

# सम्मति

नेपाली इतिहास, संस्कृति तथा पुरातत्त्व विषयका सहकर्मी डा. रञ्जना वज्राचार्यले तयार पार्नु भएको "**नेपालको बौद्धधर्ममा अष्टमीव्रत**" पुस्तक हेर्ने मौका पाए। यस पुस्तकको महत्त्वबारे मैले विशेष गुणगान गर्न नपर्ला जस्तो लाग्छ। बौद्धधर्म नेपालको पहाड देखि तराईसम्म, मेची देखि महाकाली सम्मका विविध जातिय पृष्ठभूमि भएका नेपालीहरुको मूल धर्मको रुपमा प्रतिष्ठित छ। भौगोलिक विविधता र सांस्कृतिक विशिष्टताका कारण बौद्ध संस्कृति अनुगमनमा पनि विविधता पाइन्छ। धर्मका मूल सिद्धान्त एकनाश भए पनि धर्मको क्षेत्र भित्र मनाउने विविध संस्कार-पर्वहरुमा स्थानीय भेदहरु पाउन सकिन्छ। अष्टमीव्रतका बारे पनि यही कुरा लागु हुन्छ। यसलाई महायानीहरुले काठमाडौंमा एक प्रकार र नामले तथा हिमाली क्षेत्रमा अर्को नाउँले बोलाउनु संभव छ। तर सबै संस्कार पर्वहरुको सार एउटै हो- चित्त शुद्धि तथा निर्वाण।

यस ग्रन्थले बौद्ध संस्कृतिका अध्यताहरुका लागि विशेष लाभ पुग्न सक्ने मेरो अपेक्षा छ। यस अघि लेखिकाले प्रकाशित गर्नु भएको '**पञ्चदान-बौद्धपर्व**' पुस्तक निकै लोकप्रिय रह्यो। स्नातक तथा स्नातकोत्तर तहका कक्षाहरुका लागि विशेष लाभदायक हुने यो पुस्तक सर्व-साधारणका लागि पनि त्यत्तिकै रोचक हुने मेरो विश्वास छ।

लेखिकाबाट थप कृतिहरुको आशा गर्दै उहाँको उत्तरोत्तर सफलताको कामना गर्दछु।

**प्रा. डा. प्रेमकुमार खत्री**
त्रिभुवन विश्वविद्यालय
कीर्तिपुर क्याम्पस

*२०५७ श्रावण १५*

# प्राक्कथन

विश्वको प्रत्येक समाजका मानिसहरुले आफ्नो आफ्नो संस्कृति र धर्म अनुरुप व्रत, पर्व र उत्सवहरु मनाउँदै आइरहेका पाइन्छ । यसै सन्दर्भमा नेपालका बौद्धमार्गी नेवारहरुले विशेष गरी गृहस्थवर्गले बौद्धव्रत अन्तर्गत अष्टमीव्रत वा आर्याष्टांग-उपोषथ-व्रत प्राचीनकाल देखि नै अत्यन्त उत्साह र उमंगपूर्वक मनाउँदै आइरहेको देखिन्छ । हुनत यस किसिमका उपोषथव्रत नेपालका हिमाली भेगका अरु जनजाति-शेर्पा, गुरुङ्ग र तामाङ्गहरुले विभिन्न नामकरण अनुसार मनाउँदै आईरहेतापनि काठमाडौं उपत्यकाका बौद्धमार्गी नेवारहरुले स्थानीय धर्म प्रचलन अनुसार बौद्ध गुरु पुरोहितहरुको आज्ञा र निर्देशानुरुप विभिन्न विहार तथा तीर्थस्थलहरुमा मनाउँदै आइरहेको अष्टमीव्रतको आफ्नै विशेषता र महत्व रहेको छ । आफ्नो जीवनलाई सत् मार्गतर्फ उन्मुख गराउन यस व्रतलाई धारण गर्नु वा विधिपूर्वक पालन गर्नु आफ्नो र अरुको हित र कल्याणका लागि आवश्यक देखिन्छ । तर यस किसिमका जिज्ञासुहरुका लागि व्रत र पर्वसंग सम्वन्धित ग्रन्थहरुको अभाव भएको र त्रि. वि. वि. को स्नातक तहको तीनवर्षे नेपाली इतिहास, संस्कृति तथा पुरातत्व अन्तर्गतका Religion and Society विषयको पाठ्यक्रमको आंशिक परिपूर्तिको लागि पुस्तकको कमीलाई महशुस गरी प्रस्तुत ग्रन्थ तयार पार्ने अठोट मैले गरेकी हुँ ।

मेरी पूज्य आमा चन्द्रदेवीको वार्षिक पुण्य तिथिमा उहाँ प्रति श्रद्धाञ्जलि स्वरुप एउटा ग्रन्थ प्रकाशित गर्ने कुरा मनमा रहेकै बेलामा मेरा आदरणीय दाजू श्री पद्‌मरत्न धाख्वाले आमाको वार्षिक पुण्य स्मृति स्वरुप एउटा ग्रन्थ प्रकाशन गर्ने सुझाव दिनु भएको थियो । साथै, मेरी आमा हाम्रा आराध्य देवता श्रीकरुणामयको परमभक्त र पहिले देखि नै उपोषथ व्रत धारण गरी अन्त समयमा समेत सो व्रत पालना गर्ने एक परमभक्त समेत भएकोले प्रस्तुत ग्रन्थ यस पुण्य तिथिमा प्रकाशन गर्नु उचित ठानेकी छु ।

आमाको आत्मियता, ममता र वात्सल्यताको कुनै मुल्य हुँदैन । आज मेरा अघि मेरी आमा नभएता पनि मलाई उहाँले जुन असीम स्नेह, माया र ममता प्रदान गर्नु भएको थियो त्यस्ले आज मलाई उहाँको निरन्तर संम्झना भईरहेको छ । मेरी पूज्य आमा चन्द्रदेवीले मलाई उच्च शिक्षा हासिल गर्न धेरै प्रेरणा र प्रोत्साहन दिनुभयो । म उहाँकै सत् प्रेरणाले उच्चशिक्षाका मार्गमा हिंड्न वा

यस स्थितिसम्म पुग्न सफल भएकी छु। त्यसैले मेरो सुख दुःखको हर घडीमा म उहाँलाई नै संझिने गर्दछु।

प्रस्तुत ग्रन्थ तयार पार्न मेरा श्रद्धेय पिताज्यू श्री आशारत्न धाख्वाबाट सरसल्लाह, सुझाव र भाई राजेन्द्रधाख्वा, वहिनीहरु निरञ्जना शाक्य तथा मीना शाक्यबाट पनि प्रोत्साहन र सहयोग पाएकी छु।

यस ग्रन्थलाई प्रकाशित गर्ने क्रममा मैले विभिन्न बौद्धगुरु, पुरोहित र अन्य विद्वान गुरुहरुको अमूल्य सल्लाह एवं ग्रन्थहरुको समेत सहयोग लिएकी छु। यस क्रममा सर्वप्रथम ललितपुर नःवही न्याखाचूकका श्री आशारत्न वज्राचार्यज्यू, र तंगःवाहाका श्री विक्रमराज वज्राचार्यज्यूबाट ठूलो सहयोग प्राप्त भएकोले उहाँहरु प्रति कृतज्ञता ज्ञापन गर्दछु।

यसै क्रममा प्रस्तुत ग्रन्थको पाण्डुलिपि अध्ययन गरी आवश्यक सुझाव तथा ग्रन्थको लागि आफ्ना अमूल्य मन्तव्य दिने मेरा आदरणीय गुरुहरु प्रा. डा. रामनिवास पाण्डेय्ज्यू, तथा प्रा. डा. प्रेमकुमार खत्रीज्यू प्रति पनि हार्दिक आभार ज्ञापन गर्दछु। यसै रुपमा प्रस्तुत ग्रन्थ तयार पार्न विशेष सहयोग गर्नुहुने नेपाली विभाग, पद्‌मकन्या वहुमुखी क्याम्पसका उप. प्रा. श्री प्रयागराज भट्टराईज्यू प्रति पनि कृतज्ञता ज्ञापन गर्दछु। यसको साथै प्रस्तुत ग्रन्थ तयार पार्न विभिन्न आवश्यक सामग्री र चित्रहरु उपलब्ध गराई दिने सबै महानुभावहरु प्रति पनि हार्दिक धन्यवाद व्यक्त गर्नु मेरो कर्तव्य ठान्दछु।

अन्तमा यस ग्रन्थ प्रकाशनको पुण्यानुभाव द्वारा मेरी पूजनीया माता स्वर्गीय चन्द्रदेवी धाख्वाका साथै संपूर्ण दिवंगत प्राणीहरुको कर्मक्लेश परिशुद्ध भई अष्टमीव्रतका प्रमुख देवता श्रीआर्यअमोघपाश लोकेश्वरको दर्शन प्राप्त होस् भन्ने कामना गर्दछु।

यस ग्रन्थको प्रकाशनका क्रममा असावधानीवस कुनै त्रुटि भए विद्वान र शुभेच्छुकहरुबाट सुझावको उपेक्षा राख्दै आफ्नो भनाई यही टुंग्याउने अनुमति चाहन्छु।

**सह प्रा. डा. रञ्जना धाख्वा वज्राचार्य**
नेपाली इतिहास, संस्कृति तथा पुरातत्व विभाग
पद्मकन्या वहुमुखी क्याम्पस
बागबजार

*ने.सं. ११२०*
*गुँला धर्मारम्भ*

# प्रकाशकीय

मेरी स्वर्गीय धर्मपत्नी चन्द्रदेवी धाख्वाको वार्षिक पुण्यतिथिमा प्रकाशित भएको 'नेपालको बौद्धधर्ममा अष्टमीव्रत' ग्रन्थ मेरी स्नेहमयी छोरी रञ्जना वज्राचार्यले तयार पारेकोले मलाई धेरै खुशी लागेको छ। यस कृतिको प्रकाशनबाट एकातिर बौद्धधर्मावलम्वीहरुले आफ्नो धर्मकर्म र अष्टमीव्रतको महत्त्वबारे विशेष जानकारी हासिल गर्न पाउँछन् भने अर्कोतिर विद्यार्थीहरुले पनि यसबाट थप ज्ञान आर्जन गर्न सक्ने मैले ठानेको छु।

आज मैले प्रस्तुत ग्रन्थको प्रकाशकीयमा केही कुरा उल्लेख गर्ने क्रममा मलाई आफ्ना स्वर्गीय पिता आशाकाजी धाख्वा र स्वर्गीय माता सन्तकुमारी (कान्छि) धाख्वाको वारंवार संझना आईरहेको छ। म पिताको स्वर्गवास हुँदा सानै अवस्थामैं थिएँ। उहाँको स्वर्गवासपछि मेरी माता सन्तकुमारी नितान्त रुपमा एक्लो हुनु भयो र आफ्नो जीवनलाई पूर्णरुपमा धर्मकर्ममा समर्पण गर्नुभयो। उहाँको धर्मप्रतिको समर्पणले हाम्रो घरपरिवार संपूर्णरुपमा धार्मिक वातावरणको श्रृजना भयो। मेरी माता हाम्रो परिवारकी एउटा जीवन्त धार्मिक स्वरुप हुनुहुन्थ्यो। हामी उहाँवाटै प्रेरणा पाएर पुण्यकर्मको मार्गमा लाग्न थाल्यौं। यसैक्रममा मेरी स्वर्गीय धर्मपत्नी चन्द्रदेवी धाख्वाले पनि मेरी आमावाट थुप्रै धर्मकर्मका कुराहरु सिक्ने मौका पाएकी थिइन्।

मेरी स्वर्गीय धर्मपत्नी चन्द्रदेवी निकै धार्मिक र सहनशील महिला थिइन्। मेरो हरेक कार्यमा, चाहे त्यो धार्मिक होस् वा व्यवसायिक होस, ती कार्यहरु गर्नमा उनीवाट मैले धेरै सहयोग र सरसल्लाह पाएको थिएँ। हाम्रा पारिवारीक विकासमा उनको देन अमूल्य छ। यसै क्रममा मैले ललितपुरस्थित हिरण्यवर्ण महाविहारमा सहस्राहुति यज्ञ, श्रीजटाधारी लोकेश्वरको (चाकुवहाद्यः, मीननाथ) मन्दिर जीर्णोद्धार र अन्य वौद्धधर्म सम्वन्धी कार्यहरु गर्दा उनीवाट मैले ठूलो हौसला, सरसल्लाह र प्रोत्साहन पाएको कुरा मैले कहिले पनि बिर्सने छैन।

मेरी छोरी डा. रञ्जना वज्राचार्यले आमाबाबुप्रति जुन कर्तव्य निर्वाह गर्नु पर्ने हो त्यसलाई महशुस गरी आमाप्रति श्रद्धाञ्जली स्वरुप प्रस्तुत ग्रन्थ तयार पारेकोले मलाई अति हर्षको साथै ठूलो गौरव अनुभव भईरहेको छ । उनको अध्ययन, अनुसन्धानको क्रममा निरन्तरता आउनुको साथै व्यवसायिक विकास पनि हुँदै जाओस् भन्ने म उनीलाई शुभकामनाका साथै आशीर्वाद दिन्छु ।

यस ग्रन्थ प्रकाशनको पुण्यानुभावद्वारा सम्पूर्ण प्राणीलाई बोधिज्ञान प्राप्त भई श्री अमिताभ तथागत तथा सर्वदुर्गति परिशोधन तथागतको दर्शन प्राप्त होस् भन्ने कामना गर्दछु ।

**भवतु सब्ब मंगलम् ।**

**आशारत्न धाख्वा**
**नागवहाल, ललितपुर**
**नेपाल**

*ने.सं. ११२० गुँलाथ्व*
*यल, पञ्चदान*

## अध्याय-एक

# बौद्धधर्म र व्रत

**(क) पृष्ठभूमि :**

विश्वको इतिहासमा इ.पू. छैठौं शताव्दीलाई धार्मिक क्रान्तिको शताव्दीका रुपमा मानिन्छ । त्यतिवेला नेपाल भारत लगायत विश्वका विविध भागमा प्राचीन रुढीवादी विचार, कर्मकाण्ड, अन्धविश्वास र विकृत परम्पराको विरुद्ध आध्यात्मिक र बौद्धिक आन्दोलनहरु सुरु भएका थिए। यी आन्दोलनहरुले तत्कालीन सामाजिक र धार्मिक व्यवस्थाको विरोध गरी नयाँ विचारधारहरुको सूत्रपात गरे । यस युगमा चीनमा कन्फ्युसियस, लाओत्सेले धार्मिक आन्दोलन सुरु गऱ्यो भने भारतमा महावीर बर्धमान र नेपाल लगायत भारतमा गौतमबुद्धले त्यसवेलाको अन्धविश्वास र आडम्वरयुक्त हिन्दुधर्मबाट प्रभावित उत्तर भारतीय र नेपाली समाजलाई वैदिक धर्मको प्रभावबाट मुक्त गर्न ठूलो संघर्ष प्रारम्भ गरेका थिए। त्यसैले यो इ.पू. छैठौं शताव्दीलाई निकै महत्त्वपूर्ण युगको रुपमा चिनिन्छ । यस युगमा उत्पन्न भएका नयाँ सिद्धान्त, विचारधारा र धर्महरुमा गौतमबुद्धले प्रतिपादन गर्नु भएको बौद्धधर्म निकै प्रभावशाली सिद्ध भयो । बुद्धले "सर्वसत्व हितार्थाय बुद्धशासन हेतुत:" अर्थात् सबै प्राणीहरुका हितसुखका निम्ति बुद्ध शासन स्थापना गर्नु भएको हो। बुद्धले प्रतिपादन गर्नु भएको चतुर्थआर्यसत्य, आर्यअष्टांगिक मार्गलगायत बौद्धिक र आध्यात्मिक दर्शनले सारा मानवजातिलाई सत्य र शान्तिको बाटोमा पदापर्ण गर्न सुवर्ण अवसर प्राप्त भयो । आजको आधुनिक युगमा पनि भगवान् बुद्धको उपदेश र शिक्षाको अनुकरण गरेको खण्डमा विश्वमा सच्चरित्र निर्माण भई पूर्णरुपले विश्वशान्ति हुने कुरामा सन्देह छैन ।

**(ख) बौद्धधर्मका विशेषताहरु :**

बुद्धका मूल चार उपदेशलाई चार आर्यसत्य (चतुर्आर्यसत्य) भनिन्छन् ती हुन् -

(१) दु:ख सत्य (दु:ख)

(२) दु:ख समुदय सत्य (दु:खको कारण)

(३) दु:ख निरोध सत्य (दु:खको अन्त)

(४) दु:ख निरोध मार्ग सत्य (दु:ख अन्त गर्ने मार्ग)

**(१) दु:ख सत्यः**

दु:ख सत्य भन्नाले सबैकुरा दु:खदायी हुन् भन्ने सत्यतालाई बुझ्नु हो। जन्मनु, बुढा हुनु, रोगी हुनु, मर्नु, मन नपर्नेसंग बस्नु पर्नु, मन पर्नेसंग अलग्गिन पर्नु, मनले चिताएको पूरा नहुनु वा संक्षेपमा पञ्च स्कन्द 'उपादान' (रुप, वेदना, संज्ञा, संस्कार र विज्ञान) सबै दु:ख हुन्।

**(२) दु:ख समुदय सत्य :**

दु:ख समुदय सत्य भन्नाले दु:खको कारण बुझिन्छ। प्रतीत्य समुत्पाद अनुसार दु:खको मूल कारण तृष्णा (स्वार्थी इच्छा) हो।

तृष्णा तीन प्रकारका छन्-

- कामतृष्णा-पञ्चकाम (सांसारिक विषयवस्तु) भोग्ने इच्छा
- भवतृष्णा-फेरी फेरी जन्मने इच्छा
- विभव तृष्णा-तृष्णा निर्मूल नगरी मुक्ति पाउने इच्छा, तृष्णाको हेतु वा कारण अविद्या हो (कारणवाद या हेतुवाद)

**(३) दु:ख निरोध सत्य :**

दु:खनिरोध सत्य भन्नाले दु:खको निरोध वा अन्तलाई भनिन्छ। दु:खलाई अन्त गर्नु हुन्छ भनी बुझ्नु नै दु:ख निरोध सत्य हो। दु:खको उत्पत्ति तृष्णा या अविद्यारुपी कारणबाट हुने भएकोले तृष्णाको नासले पञ्चस्कन्द उपादानको अन्त भई निर्वाण प्राप्त हुन्छ। तृष्णा निर्मूल भएको अवस्थालाई नै 'निर्वाण' भनिन्छ।

**(४) दुःख निरोध मार्ग सत्यः**

दुःख निरोध मार्ग सत्य भन्नाले दुःख निरोध गर्ने मार्ग जनाउँछ। नैतिक र अनुशासित जीवनबाट मात्रै तृष्णाको नाश हुन सक्ने भएकोले यस किसिमका जीवन व्यतित गर्न बुद्धले ८ वटा मार्गहरु वा ८ वटा अनुशासनका नियमहरु बताएका छन् जस्लाई आर्य अष्टाङ्गिकमार्ग भनिन्छ। यस्लाई निर्वाणतिर लैजाने वा निर्वाणतर्फ अभिमुख हुने मार्ग पनि भनिन्छ।

**आर्य अष्टाङ्गिकमार्ग**

| | | | |
|---|---|---|---|
| सम्यक् दृष्टि | - | ठीक धारणा (Right Vision) | प्रज्ञा |
| सम्यक् संकल्प | - | ठीक संकल्प (Right Ambition) | |
| सम्यक् वाचा | - | ठीक वचन (Right Speech) | शील |
| सम्यक कर्मान्त | - | ठीक कर्म (Right Conduct) | |
| सम्यक जीवन | - | ठीक जीविका (Right Livelihood) | |
| सम्यक् व्यायाम | - | ठीक प्रयत्न (Right Effort) | समाधि |
| सम्यक् स्मृति | - | ठीक स्मृति (Right Memory) | |
| सम्यक समाधि | - | ठीक एकाग्रता (Right Meditation) | |

**पंचशील**

१. हिंसा नगर्नु
२. चोरी नगर्नु
३. व्यभिचार नगर्नु
४. झूठो नबोल्नु
५. जाँड, रक्सी नखानु

**अष्टशील**

१. हिंसा नगर्नु
२. चोरी नगर्नु
३. व्यभिचार नगर्नु
४. झूठो नबोल्नु

५. जाँड, रक्सी नखानु
६ धर्ममा श्रद्धा राख्नु
७. मध्यान्ह पछि भोजन नगर्नु
८. संगीतमा नरम्नु र उच्च आसन त्याग गर्नु

गौतम बुद्धले प्रतिपादन गर्नु भएको बौद्धधर्मका विशेषताले गर्दा नै आज बौद्धधर्म विश्वप्रसिद्ध र प्रभावशाली सिद्ध भयो ।

बौद्धधर्म र बौद्ध संस्कृतिमा व्रत र उपवासको ठूलो महत्त्व छ । नेपालको बौद्धमार्गी नेवार समाजमा सामूहिक रुपमा व्रत धारण र पालन गर्ने निकै प्रचलन पाइन्छ । बौद्ध धर्मावलम्वीहरुमा अप्टशील पालना गरी सम्यक् आचरण अपनाई व्रत बस्नु आवश्यक मानिन्छ । बौद्धहरु व्रत र उपवासद्वारा चित्तलाई परिशुद्ध तुल्याएर निर्वाणतर्फ उन्मुख हुन सकिन्छ भन्ने कुरामा विश्वास गर्दछन् ।साथै, बौद्धधर्म मूलरुपले सर्वजनहितायको आर्दश र दर्शनमा आधारित भएको हुनाले जगत् उद्धारको कामना गरी बौद्धमार्गी नेवारहरुले विभिन्न देवी देवताको नाममा व्रतहरु धारण र पालन गर्ने परम्परा देखिन्छ ।

बौद्धमार्गी नेवारहरुको विभिन्न रीतिथिति, परम्परा, संस्कार, कलाकौशल, धर्मकर्म आदि बौद्ध संस्कृतिको उद्भव स्थल नै बौद्ध विहार-बहाल हो । यसरी धार्मिक र सांस्कृतिक केन्द्रको रुपमा रहेका यी बौद्ध विहार-वहालहरुमैं महत्त्वपूर्ण बौद्धपर्व, उत्सव र व्रतहरु संपन्न हुने गर्दछन् । यस्को साथै बौद्ध विहारमैं प्रत्येक बौद्धहरुलाई बौद्धधर्म अनुसार शिक्षादीक्षा दिई प्रवज्या ग्रहण गराई बौद्धसंघमा प्रवेश गराइन्छ । यसरी बौद्ध विहार-बहालको संरक्षणमा बसी बौद्धधर्म अनुसार शील धारण गरी सांसारिक दुःख र तृष्णाबाट आफूलाई मुक्त गराउने उद्देश्यले प्राचीनकालदेखि नै अहिलेसम्म पनि बौद्धमार्गी नेवारहरु विहार वरिपरि आफ्नो आफ्नो निवासस्थान खडा गरी बसेको पाइन्छ । बौद्धधर्म र बौद्ध संस्कृतिलाई जीवन्तता प्रदान गर्न आजसम्म पनि बौद्ध धर्मावलम्वीहरुले आफ्नो आफ्नो विहार-वहाललाई पनि संरक्षण

र संवर्द्धन गर्दै आएको पाइन्छ । त्यसैले बौद्धविहार-वहाललाई बौद्धमार्गी नेवारहरुको पर्व र व्रतहरु सम्पन्न हुने एउटा महत्त्वपूर्ण धार्मिक स्थलको रुपमा लिन सकिन्छ ।

**(ग) बौद्धधर्म अनुसार लिइने व्रतहरु :**

बौद्धधर्म अनुसार नेपालका बौद्धमार्गी नेवारहरुले विभिन्न व्रतहरु लिइने गर्दछन् । ती व्रतहरु विभिन्न बौद्ध देवीदेवताहरुको अनुस्मरणमा बस्ने परम्परा रहेको छ । विशेष गरी ती व्रतहरु मध्ये अष्टमीव्रत, पूर्णिमा व्रत, बसुन्धराव्रत, मासोपवासव्रत, आर्यताराव्रत आदि महत्त्वपूर्ण बौद्धव्रतहरुको रुपमा लिइन्छ ।

**१. अष्टमीव्रत :**

बौद्धसमाजमा प्रचलित व्रतहरुमध्ये अष्टमीव्रत निकै लोकप्रिय र महत्त्वपूर्ण व्रतको रुपमा मानिन्छ । यस व्रतका मूलदेवता श्री आर्यअमोघपाश लोकेश्वर हुन् जो लोकेश्वरका विभिन्न रुपमध्ये महत्त्वपूर्ण मानिन्छन् । बौद्धमार्गी नेवारहरुले आफ्ना धेरै जसो मूल विहारहरुमा श्री आर्यअमोघपाश लोकेश्वर को प्रतिमा यो अष्टमीव्रत धारण गर्नुको उद्देश्यले पनि प्रतिस्थापन गरेको पाइन्छ । विशेष गरी नेपालको काठमाडौं उपत्यकाका बौद्धमार्गी नेवार गृहस्थहरुले प्रत्येक महिनाको शुक्लपक्षको अष्टमीको दिनमा श्रीआर्यअमोघपाश लोकेश्वरको साथै अष्टबोधिसत्वहरुको अनुस्मरणमा यो अष्टमीव्रत धारण गर्ने परम्परा रहेको देखिन्छ । यो व्रत विभिन्न मूलविहार, द्वादश तीर्थस्थान, अष्टवैतराग (अष्टबोधिसत्व) विराजित स्थान, पाटनका चार प्राचीन अशोककालीन मानिने स्तूपहरुमा गएर सामूहिकरुपमा वज्राचार्य पुरोहितको निर्देशन र आज्ञाद्वारा व्रत धारण गर्ने गर्दछन्। नेवार बौद्ध समुदायमा अष्टमीव्रतको ठूलो महत्त्व र परम्परा देखिन्छ ।

**२. पूर्णिमाव्रत :**

भगवान् बुद्धको जन्म, सम्बोधि लाभ तथा महापरिनिर्वाण त्रिसंजोग स्वरुप प्रत्येक वैशाख पूर्णिमाको पवित्र दिनमा बौद्धमार्गी नेवारहरुले धारण

गर्ने व्रतलाई नै पूर्णिमाव्रत भनिन्छ । प्रत्येक पूर्णिमाको दिनमा भगवान् बुद्धले दिनुभएका विशेष उपदेशहरु तथा विभिन्न उल्लेखनीय घटनाहरु घटेको संम्झना स्वरुपमा पनि बौद्धमार्गी नेवारहरु उपोषथव्रत लिने गर्दछन् । वैशाख पूर्णिमालाई बुद्धपूर्णिमा, पुष्पपूर्णिमा, बुद्धजयन्तीको रुपमा पनि मानिन्छ । भगवान्बुद्धलाई शान्तिनायक शान्तिका अग्रदूत, एशियाको ज्योतिमात्र नभनी विश्वज्योतिको रुपमा पनि मान्न थालिसकेका छन् । प्रत्येक पूर्णिमाको दिनमा भगवान् बुद्धले प्रचारित गर्नु भएको पंचशील, अष्टशील ग्रहण गरी सत्मार्गमा आफूलाई लगाई पूर्णिमाव्रत धारण गर्ने बौद्धमार्गी नेवार समाजमा निकै प्रचलन पाइन्छन् ।

### ३. **बसुन्धराव्रत** :

ज्ञान र करुणाको प्रतीकको साथै सबैप्राणीहरुको पालककर्ता भगवती आर्य श्रीबसुन्धरा देवीको नाममा भाद्रकृष्ण तृतीयाको दिनमा धारण गर्ने व्रतलाई बसुन्धराव्रत भनिन्छ । यस व्रतलाई स्थानिय भाषावाट 'गातिला धलं' पनि भनिन्छ । नेपालको बौद्ध समाजमा यो बसुन्धराव्रतको ठूलो महत्त्व र परम्परा देखिन्छ ।

### ४. **मासोपवासव्रत** :

बौद्धमार्गी नेवारहरुद्वारा लिइने व्रतहरुमा मासोपवासव्रत पनि एक प्रमुख व्रत हो । यो मासोपवासव्रत विशेष गरी गुँला (श्रावण, भाद्र) को अवसरमा एक महीनासम्म केही नखाई केवल देवताको जल मात्र पिएर व्रत बस्ने गर्दछन् । यो व्रत निकै कष्टदायक छ । मासोपवास व्रत विशेष गरी पतिद्वारा 'परित्यक्ता' महिलाहरुले धारण गर्ने गर्दछन् । बुंगमतीका र ।तोमत्स्येन्द्रनाथको मन्दिर र पाटनको हिरण्यवर्ण महाविहारमा यो मासोपवासव्रत बस्ने प्रचलन विशेष रुपमा पाइन्छ ।

### ५. **आर्यताराव्रत** :

बौद्धमार्गी नेवारहरुमा श्रीआर्यतारादेवीको स्मरण र दशाक्षरमन्त्र (ॐ तारे तुतारे तुरे स्वाहा) को उच्चारण मात्रले पनि सपूर्ण दु:ख, कष्ट,

भय, रोगव्याधि हरण हुन्छ भने ठूलो विश्वास रहेको छ । आर्यताराको नाममा अष्टमीको दिन वा अरु कुनै पुण्य तिथिमा एकसय आठ तथा एक्काईस वा हजार ओटा सम्म सतु, पिण्डपात्र र अष्टमंगल आदि अर्पण गरी देवीको व्रत र पूजा गर्ने निकै प्राचीन प्रचलन रहेको पाइन्छ ।

**(घ) ञ्युङनेव्रत (ङयुनेव्रत) :**

बौद्धधर्म विकसित र विस्तारित हुँदै गएपछि श्री भिक्षुणी कमलाले (लक्ष्मी) ले दशौं एघारौं शताब्दीतीर सहस्रभुज लोकेश्वर वा षडक्षरी लोकेश्वर को अनुस्मरण गरी उपोषथव्रत चलाएकी थिइन् ।[१] यस व्रतलाई लामाबौद्ध धर्ममा 'ञ्युङने' व्रत भनिन्छ । श्री भिक्षुणी लक्ष्मीले आर्यअवलोकितेश्वरको व्रत धारण गर्ने धर्मोपदेश गरेको कुराको उल्लेख विविध ग्रन्थमा भएको पाइन्छ ।[२] अष्टमी व्रतमा जस्तै यो ञ्युङने व्रत धारण गर्दा पनि कुशल धर्म बढाउन, अकुशल पाप प्रायश्चित गर्न अष्टशीलको पालन, षडक्षरी मन्त्र 'ॐ मणि पद्मे हूँ' र "ॐ अमोघशीलासम्भर भर भर महाशूद्ध सत्व पद्म विभूषित भुज धर धर समन्त अवलोकिते हूँ फट् स्वाहा" को उच्चारण गर्नु अति आवश्यक मानिन्छ । अष्टमीव्रतमा श्रीअमोघपाश लोकेश्वरलाई प्रमुख व्रत देवताको रुपमा पूजा गरिन्छ भन्ने ञ्युङने व्रतमा सहस्रभुज लोकेश्वर वा षडक्षरी लोकेश्वरको पूजा हुन्छ । तर दुवै व्रतमा लोकेश्वरकै अनुस्मर ण र पूजा हुने हुनाले दुवै व्रत धारण गर्ने पूजा विधि विधानमा धेरैजसो समानता भएको पाइन्छ । यस किसिमको ञ्युङने व्रत बौद्धमार्गी नेवारहरु काठमाडौं उपत्यकाका बौद्ध गुम्वा, विहार-बहालमा पनि निकै बस्ने प्रचलन पाइन्छ । ललितपुरको हिरण्यवर्ण महाविहारको धर्मागार गुम्वा, ज्याथावाहा गुम्वा, भक्तपुर विहारको गुम्वा, काठमाडौंको म्हेपिंगुम्वा, स्वयम्भूको अनीगुम्वा, बौद्धका गुम्वाहरु, नागी गुम्वा र अरु विभिन्न बौद्ध गुम्वाहरुमा यस किसिमको दुई दिने, चार दिने, सोह्र दिने, एक वर्ष वा आफ्नो इच्छा अनुसार समय बढाई ञ्युङने व्रत बस्ने प्रावधान भएको पाइन्छ । धेरैजसो महायानी बौद्धमार्गी नेवारहरुले आफ्नो आफ्नो घरमा बौद्ध देवी देवता

स्थापना गरी पूजाकोठा बनाईएको हुन्छ । ती बौद्धमार्गी नेवारहरुले शुक्लाष्टमीको दिनमा अष्टशील पालन गरी सहस्रभुज लोकेश्वर गुणास्मरण गरी पूजा र उपासना गर्ने प्रचलन पाइन्छ । यस किसिमको व्रत धारण धरमा स्वयम् आफैले पुरोहित वा गुरु विना पनि सम्पन्न गर्न सकिन्छ ।

बौद्धधर्ममा ञ्युङनेव्रत वा पर्वबाट शीलादि पालन गरी ध्यान, समाधिद्वारा बोधिचित्त प्राप्त भै अन्त्यमा बुद्धत्व पद प्राप्त गर्ने उत्तम मार्ग मानिन्छ । आफू मात्र नभै संसारका सबै सत्व प्राणीहरुको उद्धार हुने भावनाले प्रेरित भएको यो ञ्युङने (उपोषथ) को अति ठूलो महत्त्व देखिन्छ ।

यसरी बौद्धमार्गी नेवारहरु बौद्धधर्म अपनाउनुको साथसाथै यस धर्मसित सम्वन्धित विभिन्न व्रतहरु पनि पालना गर्दछन् ।

***पाद टिप्पणी***

*१. लामा ज्यपम्ल दोर्ज्ये (अनुवादक), श्री भिक्षुणी कमलाको (ञ्युङने) ग्रन्थ (डुक्पा रिम्बोर्छेको नीतिअनुसार), (दार्जीलिङ : योल्मो साङ ग्ये छ्योइ लिङ)*



अध्याय–दुई

# व्रतको प्राचीनता

प्राचीनकालमा व्रत वस्नु, उपासन बस्नु आदि धर्मकर्म निकै लोकप्रिय रहेको थियो। विश्वका धेरैजसो मुलुकका मानिसहरु आफ्नो आफ्नो श्रद्धा र विश्वास अनुसार अनेक किसिमका व्रत बस्दथे।व्रतको लाभ र परिणाम भएकोले यसलाई बुझ्न वैदिक कालतिरै ध्यान पुऱ्याउनु पर्दछ।

**(क) वैदिककाल :**

'व्रत' निकै प्राचीन शब्द हो। वैदिककाल देखि नै मानिसहरुमा व्रत वस्ने प्रचलन रहेको मानिन्छ। यस 'व्रत' शब्दको गणना संस्कृतका ती शब्दहरुमा पर्न जान्छ जसको प्रचलन सहस्रौंवर्ष पहिले देखि थियो।[१] व्रत शब्दको व्युत्पत्ति र अर्थ सम्वन्धी विभिन विचार र तर्कहरु पाइन्छन्। 'सेन्ट पीटर्सवर्गकोश' मा व्रतको उत्पत्ति 'वृ' (वृज वरणे, वरण, वरण गर्नु, रोज्नु) बाट भएको मानिन्छ। यस कोशमा व्रत शब्दको अर्थ यसरी दिएको पाइन्छ-(१) संकल्प, आदेश, विधि, निर्दिष्ट व्यवस्था; (२) वशता, आज्ञापर ता, सेवा; (३) स्वामित्व अथवा रिक्थ; (४) व्यवस्था, निर्धारित उत्तराधिकार क्षेत्र; (५) वृत्ति, व्यापार, आचारिक कर्म, प्रवृत्तिमा संलग्नता, आचार अथवा रीति; (६) धार्मिक कार्य, उपासना, कर्तव्यता; (७) कुनै अनुष्ठान, धार्मिक या तपस्या सम्वन्धी कर्म वा आचरण-सेवन, संकल्प, पुनीत कर्म; (८) सामान्य रुपले संकल्प, निश्चित हेतु,; अन्य विशिष्ट अर्थ; ।[२] म्याक्समूलर ले व्रतका उत्पत्ति 'वृ' बाट लिएका छन्, जस्को अर्थ 'रक्षण गर्नु' तिर संकेत गरेका छन्। ह्विटनी नामक अर्को विद्वानले 'वृ' शब्दको अर्थ संकल्प, अनुशासन(आदेश) नमानी केवल 'वरण गर्नु' वा 'अधिक मान दिनु' उपयुक्त ठानेका छन्। उनले 'व्रत' का 'वृत्' (वृतु वर्तने, प्रवृत्त वा प्रारम्भ गर्नु वा अगाडि बढ्नु) बाट व्युत्पादन भएको बढी राम्रो ठानेका छन्।[३] अर्का विद्वान

प्रो. वी. एम्. आप्टेले ह्विटनीका कुरालाई समर्थन गरी 'वृत्' बाट नै 'व्रत' शब्द व्युत्पन्न भएको कुरालाई मान्यता दिएका छन् ।[४] तर आजभन्दा लगभग २५ शताब्दी पूर्व यास्क भन्ने विद्वानले व्रतको व्युत्पति 'वृ' (वृञ्) धातुबाट भएको कुरालाई नै अधिकांश विद्वानहरुले मानेको कुरालाई मान्यता दिएका छन् ।[५] वृ को अर्थ वरण गर्नु भन्ने संकेत हुन्छ । 'वृ' धातुबाट वर (वेहुला जो कुनै कन्या वा उनीकै अभिभावक द्वारा धेरै व्यक्तिहरु मध्येबाट रोजेको हुन्छ) शब्दबाट आएको हो । अतः 'वृ' को तात्पर्य इच्छा गर्नु पनि हो र 'वृ' मा 'त' मिलेर यस्को अर्थ संकल्पित, संकल्प वा इच्छा भन्ने पनि हुन्छ । जुन व्यक्ति शक्ति सम्पन्न या अधिकारी भएको छ उसको इच्छा अरु मानिसहरुको लागि आदेश वा कानुन (विधि) हुन जान्छ । जव कुनै व्यक्ति देवताहरुको अनुग्रह प्राप्तिका लागि आफ्नो आचरण या भोजनमा विशिष्ट रोक लगाउँछ तव त्यो व्यवहारले पुनीत संकल्प वा धार्मिक आचार कर्मको रुप धारण गर्दछ । यस प्रकार 'वृ' बाट व्युत्पन्न व्रत शब्दको अर्थ आदेश वा विधि (कानुन), आज्ञापालन वा कर्तव्यता, धार्मिक वा नैतिक व्यवहार, धार्मिक उपासना वा आचरण, पुनीत वा गम्भीर संकल्प वा स्वीकरण तथा आचरण सम्वन्धी कुनै पनि संकल्प हो ।[६] ऋग्वेदमा जम्मा २२० पटक व्रत शब्दको उल्लेख पाइन्छ । ऋग्वेदमा जहाँ जहाँ व्रत शब्द प्रयोग भएको छ, ती सबै उपर्युक्त अर्थहरु मैं व्यक्त भएको देखिन्छ ।[७]

व्रतको दोस्रो गौण अर्थ 'उपवास' हो । ऐतरेयब्राम्हण ७ २ अनुसार देवताहरुले व्रत नलिने व्यक्तिको हवि ग्रहण नगर्ने हुनाले मानिसहरुले व्रत वस्ने वा उपवास गर्ने गरेको कुरा उल्लेख भएको पाइन्छ । अतः देवताहरुलाई प्रसन्न पार्नको लागि उपवास बस्नु पर्दछ । व्रत बसेपछि यज्ञ कर्ममा सहभागी हुन वा याज्ञिक कार्यको अधिकारी वा कर्ता हुन पाइन्छ ।

**(ख) वेदपछिकोकाल :**

स्मृति साहित्यमा पनि व्रतको चर्चा पाइन्छ । मनुस्मृति अनुसार व्रत मानिसहरुले प्रायश्चित स्वरुप् लिने गर्दछन् । व्रतलाई बन्धनका रुपमा पनि

लिइन्छ जस्मा कठोर नियमहरु पालन गर्नु पर्ने हुन्छ । महाभारतको समयमा व्रत मुख्यतया धार्मिक संकल्पको रुपमा पालन गरिन्थ्यो (वनपर्व) । व्रत ब्रह्मचारी, स्नातक या गृहस्थहरु कुनै विशिष्ट साध्य उपलब्धिका लागि बस्ने गर्दछन् । याज्ञवल्कय स्मृतिमा व्रत शब्द प्रायश्चितको रुपमा लिने गरेको पाइन्छ (३ २५१, २५२, २५४, २६६, २६९, ३००) ।

(ग) **व्रतका श्रेणी विभाजन** :

व्रतहरु धेरै जसो स्वारोपित या ऐच्छिक भएको उल्लेख पाइन्छ । यी व्रतहरु तीन श्रेणीमा विभाजित छन् । (१) मानस व्रत, (२) कायिक व्रत र (ग) वाचिक व्रत)

(१) **मानस व्रत** : पद्म पुराण (४ ८४ ४२-४४) अनुसार अहिंसा, सत्य, अस्तेय, ब्रह्मचर्य, अकल्कता (कुटिलताबाट अलग) बस्नु नै मानस व्रत हो, जस्बाट हरि प्रसन्न हुन्छन् ।

(२) **कायिक व्रत** : दिनमा केवल एक पटक भोजन गर्नु, नक्त (केवल एकपटक सूर्यास्त पछि भोजन गर्नु), अयाचित (यस्तो भोजन जो नमागीकन प्राप्त हुन्छ) र उपवास (दिनभर नखाने) मा बस्नुलाई नै कायिक व्रत भनिन्छ ।

(३) **वाचिक व्रत** : वेदाध्ययन, विष्णु कीर्तन, सत्य भाषण, अपैशून्य (पीठ पछाडि निन्दा नगर्नु) लाई नै वाजिकव्रत भनिन्छ ।

व्रतको दोस्रो विभाजन कालको आधारमा पनि हुन्छ । कुनै व्रत एक दिनको, पाक्षिक, मासिक, एक ऋतुको उत्तरायण या दक्षिणायन, वार्षिक र धेरै वर्षसम्म बस्ने व्रत आदि । व्रत धेरै जसो तिथिमा बस्ने तिथिव्रत मानिन्छ । उदाहरणका लागि अष्टमीव्रत, पूर्णिमा व्रत, संक्रान्तिव्रत, मासव्रत, ऋतुव्रत । अधिकांश मानव धर्म (पुण्य), सन्तति, धन, सौद्रर्य, सौभाग्य, सदाचरण, कीर्ति, विद्या, आयु, आनन्दोपभोग स्वर्ग, मोक्ष व्रत धारण र पालन गर्ने

हुन्छ । प्रसिद्ध ग्रन्थ कल्पतरु अनुसार व्रतले ब्रम्हलोक, शिवलोक, बैकुण्ठ प्राप्त गर्न सकिन्छ । सत्य, त्रेता, द्वापर र कलियगुमा सुजय, राम, धनन्जय एवंम विक्रम नामक राजाहरुको लोकशासन व्रत पालनबाट प्राप्त भएको थियो । शंकरले व्रत मनुष्यका लागि सर्वोत्तम कृत्य भनेका छन् ।

वैदिककालमा गृहस्थवर्गको लागि दर्श (New Moon) र पूर्णमास (Full Moon) को दिनमा व्रत बस्ने प्रचलन थियो । त्यसवेला आचारपूर्ण यज्ञ गर्नको लागि एक दिन अगाडि देखि तयारी कार्यक्रमको रुपमा एउटा कोठामा अग्नि बाली जुन देवताको नाममा यज्ञ गर्ने हो त्यस्को स्मरणमा व्रतालु रातभर बस्ने गरिन्थ्यो । त्यसरात व्रतालुसंगै देवता पनि बसेको समेत मानिन्छ । त्यसैले व्रतको दिनलाई उपवासस्थ दिन ('उप' नजिक र 'वास' रहनु वा बस्नु) भनियो ।

यसरी वैदिककालदेखि मानिसहरु आफ्नो इच्छा, आकांक्षा र कामना पूर्तिका लागि विभिन्न देवी देवताको नाममा व्रत, उपवास बस्ने प्रचलन पाइन्छ ।

*पाद टिप्पणी*

१ *डा. पी. वी. काँणे (अर्जुन चौबे काश्यप, अनुवादक), धर्मशास्त्रका इतिहास, चतुर्थ भाग (लखनऊ: उत्तर प्रवेश, हिन्दी संस्थान) १९८४, पृ. ३*

२ *उही*

३ *उही*

४ *उही पृष्ठ ४*

५ *उही पृष्ठ ५*

६ *उही*

७ उही



अध्याय-तीन

# अष्टमीव्रतको नामाङ्कन र तिथि

कुनै पनि व्रत, उपवास, अनुष्ठानको नाम र व्रत बस्ने निश्चित तिथि निर्धारण गरिएको हुन्छ । त्यस्तै यस अष्टमीव्रतलाई विभिन्न नामले सम्वोधन गरिएको पाइन्छ भने यो व्रत बस्ने तिथि पनि निश्चित गरिएको देखिन्छ ।

**(क) नामाङ्कन :**

नेवार बौद्धमार्गी समाजमा विशेष गरी शुक्लपक्षको अष्टमीको दिनमा श्री आर्यअमोघपाश लोकेश्वरको अनुस्मरणमा व्रत बस्नेलाई नै 'अष्टमी व्रत' भनिन्छ । यो व्रतलाई आर्याष्टांग-उपोषथ-व्रत, अष्टांगिक-उपोसथ-व्रत, आर्य-उपोसथ-व्रत, पोडध व्रत, करुणामय धलँ आदि नामले पुकारेको पाइन्छ । यस व्रतको नाम आर्याष्टांग बाट नै व्रत धारण गर्ने व्रतालुहरुलाई अष्टसूत्र (अष्टशील) वा अष्टनियमहरुले बाँडिने कुराको संकेत दिन्छ । स्थानीय भाषामा व्रत बस्नेलाई 'धलँदने' र'अपस्व:च्वने' भनिन्छ । धर्मदने अर्थात धर्मधारण गर्नेबाट धलँदने र उपोषथ वा उपोपथबाट अपस्वच्वने अर्थात् व्रत बस्ने भएको मानिन्छ ।[1] बुद्धको समयकालमा पालीभाषाबाट 'उपोषथ' भन्ने प्रचलन पाइन्छ भने संस्कृत र नेवारी पूजा सूत्र र ग्रन्थहरुमा 'उपोषध' भनी उल्लेख गरेको पाइन्छ ।

**(ख) तिथि :**

बौद्धमार्गी नेवार समाजमा अष्टमीव्रत विशेष गरी शुक्लपक्षको अष्टमीको दिनमा बस्ने गरिन्छ । यो व्रत कसैंले वर्षभरीमा १२ पटक, कसैंले २४ पटक र कसैंले १०८ लोकेश्वरको नाममा १०८ पटकसम्म व्रत बसेर समापन

आज मैले यो यो खाना खाए र भोलि यो यो खाना खानेछु वा यो यो भोजन गर्नेछु भनेर सौचन थाले भने त्यो गोपाल उपोषथ हुन जानेछ । त्यस्तो सोचेर व्रत बस्नाले कुनै पनि महान् फल, महान् परिणाम, महान् प्रकाश र महान् विस्तार हुँदैन । अर्थात् यो व्रत निम्न कोटिको व्रत मानिन्छ ।

(२) **निर्ग्रन्थ उपोषथ** :

निर्ग्रन्थ उपोषथ भन्नाले पक्षपातिपूर्ण, मृषावादी र वस्त्र त्यागने उपोषथलाई भनिन्छ जस्को कुनै फल र परिणाम हुँदैन । निर्ग्रन्थ नामक जातिका श्रमणहरुको मतानुसारको पूर्व, पश्चिम, उत्तर र दक्षिण दिशामा सौ सौ योजन सम्मका जति प्राणीहरु छन् तिनीहरुलाई दण्डबाट मुक्त गर्ने भनेर कुनै प्राणीहरु प्रति दया व्यक्त गर्ने कुनै प्राणीहरुप्रति दया व्यक्त नगर्ने पक्षपातिपूर्ण व्रत लिनेलाई नै निर्ग्रन्थ भनिन्छ । यस्तो व्रतलिने आफ्नो सबै बस्त्र त्यागेर म कसैको पनि होइन र मेरो कोही छैन भने झुठो कुरा व्यक्त गर्दछन् जवकि उनका छोराछोरी वा आमा र स्त्री सबैले उनलाई र उनले सबैलाई आफ्नो पारिवारिक सम्वन्धको ज्ञान राम्ररि भएको हुन्छ । यस्तो बेलामा उनी झूठा(मृषावादी) सिद्ध हुन्छ । व्रत बसेको दिन र रात वितेपछि उनले ती वस्तुहरु प्रयोगमा ल्याउने गर्दछन् जुन उस्लाई कसैले दिएको हुँदैन । यस किसिमबाट उनले चोरी गरेको ठहरिन्छ । त्यसैले यस्तो निर्ग्रन्थ उपोषथव्रतको पनि कुनै पनि फल, परिणाम, प्रकाश र विस्तार हुँदैन ।

(३) **आर्यउपोषथ** :

भगवान् गौतमबुद्धको उपदेश अनुसार आर्यश्रावकले तथागत(बुद्ध), धर्म र संघलाई अनुस्मरण गरेर व्रत लिनुलाई आर्यउपोपथव्रत भनिन्छ । आर्यश्रावकले तथागत्लाई अनुस्मरण गरिन्छ किनकि भगवान् तथागत अर्हत, सम्यक सम्बुद्ध, विद्या र आचरणमा युक्त, सुगतिप्राप्त, लोकका जानफकार सर्वश्रेप्ठ हुन् । उनी पुरुपहरको दमन गर्ने सारथी, देवता र मनुप्यहरुका शास्ता हुन् । यसरी अनेक गुणले युक्त भगवान् तथागतको अनुस्मरण गर्नाले चित्त प्रसन्न भई टाउकोको क्लेश क्रमशः हटेर निर्मल

हुँदै जान्छ । यसैलाई आर्य-श्रावक ब्रम्ह-उपोषथव्रत भनिन्छ ।

यस व्रतमा आर्यश्रावक धर्मको अनुस्मरण गरिन्छ किनकि तथागतले प्रतिपादन गर्नु भएको धर्म इहलोकसम्वन्धी हो । यसको पालन सबै देश र कालमा गर्न सकिन्छ । यस धर्मद्वारा निर्वाण पदसम्म हासिल गर्न सकिन्छ । प्रत्येक बुद्धिमान् मानिसले यस धर्मलाई अपनाउन सक्दछ । यस किसिमका धर्मको अनुस्मरण गर्नाले चित्तको मैला हटेर मैलो शरीर क्रमशः निर्मल हुँदै जानेछ ।

यस व्रतमा आर्यश्रावकसंघका अनुस्मरण गरिन्छ किनकि भगवान् बुद्धका श्रावक-संघ सरल, सुन्दर र न्यायपूर्ण मार्ग हो । यो संघ आदर योग्य, आतिथ्य र दानदक्षिणा दिन योग्य छ । यसरी श्रावक-संघ सर्वश्रेष्ठ पुण्य क्षेत्र भएकोले यसको अनुस्मरण गर्नाले चित्त शुद्ध भई मैलो वस्त्र क्रमशः निर्मल हुँदै जान्छ । आर्य-श्रावकले आफ्नो अखण्डित, छिद्र-रहित, पवित्र, शुद्ध, अकलंकित शीलहरु पालन गरी स्मरण गर्छन् जसले चित्तलाई समाधितिर उन्मुख गराउँछ र चित्त शुद्ध पार्दछ ।[३]

बौद्धधर्ममा श्रद्धा, शील, श्रुत, त्याग र प्रज्ञाको ठूलो महत्त्व र मान्यता छ । यसमा चातुम्महाराजिका देवता तावतिंस देवता, याम देवता, तुषित देवता, निम्मान-रतिदेवता, परनिम्मितवसवती देवता, ब्रह्मकामिकदेवता आदि देवताहरुमा उपर्युक्त गुणहरु पनि विद्यमान छन् । यी सबै गुणहरु भगवान् तथागतमा पनि पूर्ण भएकोले यी माथिका देवताहरुको साथै भगवान् तथागतको स्मरण गरेको खण्डमा चित्तको मैलोपना (क्लेश) हटेर निर्मल हुन्छ ।

अर्हतले जीवनभर अप्टशील पालन गरेको हुन्छ । अप्टशील पालन गरी प्राणीहरुउपर अनुकम्पा राखी विचरण गरेको हुन्छ । भगवान् बुद्धको उपदेश अनुसार उपोषथव्रत बस्दा एक दिन एकरात भए पनि अर्हतले जस्तै अप्टशील पालन गरी प्राणीहरु उपर अनुकम्पा राखी विचरण गरेपछिमात्र उपोषथव्रत पुरा हुन्छ ।[४] यसरी भगवान् बुद्धले श्रावस्तिमा मिगारमाता

विशाखालाई आर्यअष्टांगउपोषथव्रत लिंदा वा धारण गर्दा तथागत(बुद्ध), धर्म र संघको अनुस्मरण गरी अष्टशील पालन गर्ने उपदेश दिनुभएको थियो। अंगुत्तरनिकायमा उपोपथव्रतबारे यसकिसिमको वर्णन पाइन्छ।

**पाणं न हाने न चादिन्नं आदिये**
**मुसा न भासे न च मज्जपो सिया**
**अब्रम्हचर्य्या विरमेय्य मेथुना**
**रत्तिं न भुञ्जेय्य विकालभोजनं॥**
**मालं न धारेय्य न च गन्धं आचरे**
**मञ्चे छमायं वसयेथ सन्थते**
**एतं हि अट्ठंगिकमाहुपोसथं**
**बुद्धेन दुक्खंतगुणं पकासितं॥**
**चन्दो च सुरियो च उभो सुदस्सना**
**ओभासयं अनुपरियन्ति यावता**
**तमोनुदा ते पन अन्तलिक्खगा**
**नभे पभासन्ति दिसा विरोचना**
**एतस्मिं यं विज्जति अन्तर धनं**
**मुत्तं मणिं वेलुरियं च भद्दकं**
**सिंगीसुवण्णं अथवापि कञ्चनं**
**यं जातरुपं हाटकं ति वुच्चति**
**अट्ठंगुपेतस्स उयोसथस्स**
**कलं पि ते नानुभन्ति सोलसिं**
**चन्दप्पभा तारगणा च सब्बे**
**तस्मा ही नारी च नरो च सीलवा**
**अट्ठंगुपेतं उपवस्सुपोसथं**
**पुञ्ञानि कत्वान सुदुद्रयानि**
**अनिन्दिता सग्गमुपेन्ति ठानं**

(अर्थ : प्राणी-हिंसा नगर्ने, चोरी नगर्ने, झूठो नबोल्ने, मद्यपान नगर्ने । अब्रह्मचर्य्य मैथुन देखि विरक्त हुने । रात्रिको विकाल-भोजन नगर्ने, माला नलगाउने । सुगन्धित वस्तु धारण नगर्ने । मञ्चमा या विछी-भूमिका सुत्ने । बुद्धले दुःखको अन्त गर्ने यस अष्टांग-उपोषथव्रतको प्रतिपादन गरे । चन्द्रमा तथा सुर्य दुवै सुदर्शन हुन् । उनीले जहाँसम्म (सम्भव भएसम्म) प्रकाश फैलाउने छन् । उनी अन्तरिक्षगामी हुन् । अन्धकारका विध्वंसक हुन् । उनीले आकाशका सबै दिशाहरु आलोकित गर्दछन् । यहाँ यी बीचमा जुन कुनैपनि मुक्ता, मणि, तथा श्रेष्ठ विल्लौर धन थियो, स्वर्ण अथवा काञ्चन जुन जातरुप वा हाटक पनि भनिन्छ त्यो तथा चन्द्रमाका प्रकाश र सबै तारागण अष्टांग उपोषथ-व्रत-पालन गर्नेको सोह्रौं हिस्साको पनि बराबर हुनेछैन । त्यसैले जो सदाचारी नारी र नर छन् र उनले अष्टांग उपोषथ(-व्रत) को पालन गर तथा सुख-दायक पुण्य कर्म गर, आनिन्दित होउन्, स्वर्ग-स्थान प्राप्त हुनेछ ।)[५]

यसरी भगवान् बुद्ध स्वयमले नै गृहस्थहरुलाई उपोषथव्रत पालन गर्दा कुन कुन कुराको अनुस्मरण गर्ने र कुन कुन शीलको पालन गर्ने भन्ने वारे चर्चा गरेको पाइन्छ । साथै यस व्रतको पुण्य र महत्त्व बुझाउँदै उपोषथव्रत पालन गर्ने स्त्री या पुरुष मर्ने वित्तिकै परनिम्मितवसवत्ती देवताहरुको सहवासी हुने छ भन्ने बुद्धवाणी उल्लेख भएको पाइन्छ ।

**(ख) उपोषथव्रत बस्ने दिन**

अंगुत्तरनिकायमा उपोषथव्रत बस्ने निम्न विशेष दिनहरु पनि उल्लेख गरेको पाइन्छ । ती हुन् -

१) कृष्णपक्षको अष्टमी र चतुर्दशी या दशमी र अमावस्या

२) शुक्लपक्षको अष्टमी र पूर्णिमा

**(ग) बौद्ध संघका भिक्षुहरु उपोषथ बस्ने दिन** [६]

बौद्ध संघमा नौ किसिमबाट उपोषथव्रत बस्ने प्रचलन पाइन्छ । ती हुन :

**(१) दिन उपोषथ**

(क) चतुर्दशी-१४ दिनमा एक पटक गरिने

(ख) पण्णरसि-१५ दिनमा एक पटक गरिने

(ग) सामग्गि-परस्पर मेलमिलाप पछि पुनः उपोपथ गर्ने

**(२) कारक उपोषथ (संख्या अनुसार)**

(क) संघ उपोपथ-४ वा बढी भिक्षुहरु भएको

(ख) गण उपोपथ-२ वा ३ भिक्षुहरु भएको

(ग) पुद्गल उपोपथ-एक्लै गरिने

**३) <u>कर्तव्याकार उपोषथ (कर्तव्य अनुसार)</u>**

(क) सन्तुदेश उपोपथ-४ वा बढी भिक्षुहरु भएको

(ख) पारिशुद्धि उपोपथ-२ वा ३ भिक्षुहरु भएको

(ग) अधिष्ठान उपोपथ-एक्लै गरिने

यसरी भगवान् बुद्धले संघको प्रमखुलाई मात्रै होइनकि संसारका सबै प्राणीहरुका लागि पनि उपोपथको व्यवस्था गर्नु भएको थियो ।[७] बौद्ध गृहस्थहरुले लिने उपोपथव्रत भिक्षुहरुले लिने भन्दा भिन्दै किसिमको थियो । उनीहरुले उपोपथव्रत सबै कामधन्दाबाट अवकाश-दिवश वा छुट्टीको दिन (holiday) को रुपमा मान्ने गरिन्थ्यो । साथै अप्टशील पालन गरी आफ्नो चित्तलाई परिशुद्ध तुल्याउँदथे ।[८] यसकिसिमको उपोपथ अहिले सम्म पनि थेरवाद बौद्धधर्म मान्ने देशहरुमा जस्तो श्रीलंकामा मान्ने गरिन्छ जहाँ यस किसिमको उपोपथ दिनलाई 'पोय' दिन भनिन्छ । पोय दिनमा बौद्ध गृहस्थहरु आफ्नो सबै पारिवारीक र व्यवहारिक कतर्व्य र कार्यबाट अवकाश लिई विहारमा आएर अप्टाशील पालन गरीभिक्षुहरुबाट उपदेश सुन्ने गर्दछन् ।[९]

दीर्घ निकायमा गृहस्थवर्गलाई ६ वटा विशेप शीलहरु उल्लेख गरि एको छ जसले स्वर्गको बाटो देखाउँछ ।

सुत्त-पिटकमा गृहस्थवर्ग (गृहपत्तीवग्ग) हरुका लागि छुट्टै सुत्तका विभिन्न खण्डहरु उल्लेख गरेका छ ।[१०]

## (घ) बौद्ध ग्रन्थहरुमा अष्टमी व्रतको उल्लेख

बौद्ध समुदायमा पहिले देखिनै उपोपथ वा अप्टमीव्रत पालन गर्ने परम्परा पाइन्थ्यो । यस व्रतको उल्लेख विभिन्न बौद्ध ग्रन्थहरुमा पाइन्छ । बौद्ध धर्मावलम्वीहरुको नवग्रन्थमध्ये ईस्वीको प्रथम-द्वितीय शताव्दीको "ललितविस्तरः" सूत्रमा सिद्दार्थ गौतमकी पत्नी यशोधराले अप्टमीव्रत वा अप्टांगउपोपथव्रत धारण गरेको उल्लेख पाइन्छ ।[११] त्यस्तै ईस्वीको तेह्रौं शताव्दीको अर्को बौद्ध ग्रन्थ"आर्य गुणकारण्डव्यूह" सूत्रमा आर्य उपोपथ अप्टमी व्रतको चर्चा पाइन्छ ।१२ उक्त ग्रन्थमा श्री आर्यावलोकितेश्वरले सिंहलद्वीपका राक्षसी गणहरुलाई अप्टमीव्रत धारण गर्न श्री अमोघपाश लोकेश्वरको अनुस्मरण र बुद्ध, धर्म र संघको शरणमा पठाई राक्षसी प्रवृतिबाट मुक्त गराएको वर्णन पाइन्छ । साथै अप्टमीव्रत बस्नको लागि चाहिने विभिन्न सामग्री र व्रत विधि विधान पनि उक्त ग्रन्थमा उल्लेख छ ।[१३] 'दीर्घरथावदान' नामक अवदान ग्रन्थमा नागिरीपुर (नालादेश) का राजा दीर्घरथको अकुशल कर्मले दैवीप्रकोप भएर खण्डवृप्टि र अनावृप्टि भएर हाहाकार भएको वेलामा सुखावती भूवनका सुधर्मा देवीको असिम करुणाले राजा दीर्घरथ, रानी सुभलक्ष्मीका साथ प्रजाहरुले पनि पुण्यमातातीर्थमा उपोषथव्रत धारण गर्दा देशमा सुभिक्ष भएर जलवृप्टि भएको उल्लेख पाइन्छ ।[१४] त्यसैले अहिलेसम्म पनि बौद्धमार्गी नेवारहरु विशेप गरी नालाको श्रृप्टिकान्त लोकेश्वरलाई अमोधपाश लोकेश्वरको रुपमा मानेर त्यहाँ गई सामूहिक रुपमा उपोषथ वा अप्टमी व्रत बसी पूजा गर्ने प्रचलन निकै पाइन्छ । कुनै कुनै ग्रन्थमा यो उपोपथव्रत सबभन्दा पहिले उपोपध देवपुत्र, उपोपध राजकुमारले पालन गरेको उल्लेख पनि पाइन्छ ।[१५]

आर्य गुणकारण्डव्यूहमा पोडधव्रत लाई केन्द्रित गरी यसबारे विशेप चर्चा गरेको पाइन्छ । तेह्रौं शताव्दीको तिब्बती भाषामा अनुवाद गरिएको

हस्तलिखित पुस्तिकालाई पोडध व्रतको विवरण भएको सबभन्दा पूरानो ग्रन्थ मानिन्छ र यो पोडध व्रतको विकास एघारों शताब्दीको हुन सक्ने संभावना विद्वानहरुले मानेका छन् ।[१६] तिव्बती तङ्गुरमा (bs Tan gyur) पनि पोडध व्रतको आचारसम्वन्धी उल्लेख पाइन्छ । कसैले भारतको बौद्धधर्ममा अमोधपाशको उपासना गर्ने र अष्टमीव्रत बस्ने प्रचलन पछि मात्र विकास भएको मानेका छन् र भारतबाट नेपालमा प्रचार भएपछि यस व्रतको पूर्ण विकास भएको थियो । [१७] तर बाह्रौं शताब्दीको एउटा तिब्बती साधनमा यस व्रतको प्रारम्भिक अनुष्ठानबारे उल्लेख छ (Roerich, 1953) र यो नेपालबाट तिब्बतमा प्रचारित भएको थियो । (Lewis 1988)

(ङ) **चिनिया यात्री इत्सिंगको वर्णन** :

महायान बौद्ध धर्मको विकास भएपछि उपोपथ धारण गर्ने प्रथामा पनि केही परिवर्तन आएको देखिन्छ । ईस्वीको सातौं शताब्दीमा भारत भ्रमण गर्न आउने चिनियाँ यात्री इत्सिंगले त्यसवेला गृहस्थवर्गद्वारा उपोपथव्रत लिने गरिएको बारे विस्तृत वर्णन गरेको पाइन्छ ।[१८] उनको वर्णन अनुसार त्यसबेला उपोषथको दिनमा भिक्षुहरुलाई पुरोहितको रुपमा निमन्त्रणा गरेर पूजा गर्दा विभिन्न श्लोकहरु उच्चारण गरी फूलहरु चढाउने र धार्मिक कथाहरु सुनाउने गरिन्थ्यो । साथै यस व्रत उत्सवमा भिक्षुहरुलाई बडो उत्साहपूर्वक थरीथरीका परिकार बनाई भोजन प्रदान गर्ने प्रकिया बारे पनि इत्सिंगले वर्णन गरेका छन् ।[१९] यस वर्णनबाट भगवान् बुद्धको समयदेखि प्रचलनमा आएको यो व्रत करीब बाह्रसय वर्षपछि समय नेपाल-भारतमा एकनास लोकप्रिय रहेको कुरा बुझ्न सकिन्छ ।

अहिले बौद्धमार्गी नेवार समाजमा जुन शुक्लपक्षको अष्टमीको दिनमा व्यक्तिगत वा सामूहिक रुपमा विहार-बहाल, तीर्थ, स्तूप आदि ठाउँहरुमा गएर आर्य अष्टांगिक-उपोषथव्रत धारण गर्ने प्रचलन छ त्यो उहिले बुद्धले प्रकाशित गर्नु भएको आर्य उपोषथव्रतकै विकसित रुप भएको अनुमान हुन आउँछ ।

पाद टिप्पणी

१. भदन्त आनन्द कौशल्यायन, अंगुत्तरनिकाय, प्रथम भाग (कलकत्ता : महाबोधि सभा, १९५७) पृष्ठ ३
२. उही पृष्ठ २१५
३. उही पृष्ठ २१८
४. उही पृष्ठ २१६-२२१
५. उही
६. प्रकाश वज्राचार्य, बौद्ध दर्पण दोस्रो संस्करण, (श्रीघः विहारः धर्मकिर्ति प्रकाशन, धर्म किर्ति विहार बु. सं २५४०) पृष्ठ १०२-१०३
७. H.Kern, **Manual of Indian Buddhism,** (Delhi varanasi: Motilal Banarsidass 1989) Pg. 99
८. Sukumar Dutt, **Buddhist Monks and Monasteries of India** (Delhi, Varanasi: Motilal Banarsidass 1988) Pg. 105
९. उही
१०. उही
११. पं निष्ठानन्द वज्राचार्य (भाषानुवादक र संग्रहकर्ता), ललिविस्तरः सूत्र (ललितपुर, नेपालः युवक बौद्ध प्रकाशन, ने.सं १०९८) पृष्ठ. १५८, १७५
१२. पं जोगमुनि वज्राचार्य (भाषनुवादक), आर्य गुणकारण्डव्यूह सूत्र (ललितपुर, चाकुपाट, नागार्जुन बौद्ध अध्ययन संस्थान, ने. सं १११७) पृष्ठ ७९
१३. उही
१४. रत्नकाजी वज्राचार्य, निपु-अवदान (नमो बुद्ध व नालाया बाखँ), (यें, षदक्षरी महाविहार : बुद्धिमान शाक्य ने. सं १११६) पृष्ठ ३८-४५
१५. पं. बै आशाकाजी वज्राचार्य (संग्रहकर्ता), नेपाल द्वादश तीर्थ व्रत, (यल, नागवहाल : श्री बुद्धराज शाक्य, ने. सं ११०१) पृष्ठ. ई.
१६. W.B. Douglas, **Literary Sources of the Gunakarandavyuha** (Paper delivered at a conference on the Buddhist Heritage of Nepal Mandala 1998, Organized by Lotus Reseach Center) Pg. 3
१७. उही पृष्ठ. ४
१८. संतराम वी.ए., इत्सिंगकी भारतयात्रा, सरस्वती सिरीज नं ५४ (प्रयागः इंडियन प्रेस लिमिटेड) पृष्ठ २७-८७, पृष्ठ १४३-१४५
१९. उही पृष्ठ २७-३८ S. Dutt, P. 104–106



अध्याय-पाँच

# अष्टमीव्रतको महत्त्व र उद्देश्य

बौद्धधर्मको महायान मतावलम्वी समाजमा मण्डल लोकेश्वरको ठूलो सम्मान र महत्त्व छ । काठमाडौं उपत्यकाभित्र स्थापित लोकेश्वरका मूर्तिहरु, पौभा चित्रहरु, लोकेश्वरका मण्डलहरु र यस देवतासित संम्वन्धि अनेकौं ग्रन्थहरु आर्य गुणकारण्डव्यूह, कारण्डव्यूह, ललितविस्तर: सूत्र, सुखावती व्यूह, अप्टमीव्रत कथा एवं धर्म संगीति सूत्र: र लोकेश्वर र करुणामयको मूल षडक्षरी मन्त्र 'ॐ मणि पद्मे हुँ' को उच्चारण बौद्ध जगत्मा बढी गर्ने प्रचलनबाट लोकेश्वरको महत्त्व र लोकप्रिय भएको कुरालाई पुष्टि गर्दछ । यस्को महत्त्वलाई बुझी महायान सम्प्रदायका बौद्ध धर्मावलम्वीहरुले आफ्नो आफ्नो घरमा लोकेश्वर सम्वन्धी कुनै न कुनै मूर्ति, ग्रन्थ वा पौभाचित्र राख्न सक्नु नै विशेष गौरव सम्झन्छन् ।

**(क) व्रतको महत्त्व** :

बौद्ध समाजमा पूर्णिमा, अप्टमी, द्वादशी चर्तुर्दशी आदि दिनहरुलाई पुण्य तिथिको रुपमा मानिन्छ । त्यस्मा पनि अप्टमीको दिनलाई विशेष महत्त्व दिइन्छ । प्राचीनकालमा बौद्धहरु अप्टमीको दिनलाई प्रतिमोक्ष (Patimoksa) दिनको रुपमा मानिन्छ ।[१] प्राचीनकालदेखि अहिले सम्म पनि अप्टमीको दिनलाई महत्त्वपूर्ण पुण्यतिथिको रुपमा मानी बौद्धहरु देवीदेवताहरुको मूर्ति प्रतिस्थापित गर्ने, व्रत बस्ने, यज्ञ गर्ने अनेकौं धार्मिक कियाकलापहरु गर्ने बढी प्रचलन भएको कुरा विभिन्न शिलालेखहरु द्वारा स्पस्त हुन्छ । बौद्ध समुदायमा अप्टमीकै दिनमा श्री अमोघपाश लोकेश्वरको अनुस्मरणमा अप्टमी व्रत बस्ने प्रचलन निकै महत्त्वपूर्ण मानिन्छ । यो देवताको पूजा र व्रत चलाउन अप्टमी व्रत गुठीहरुको स्थापना र विभिन्न विहारहरुमा श्री अमोघपाश लोकेश्वरको प्रतिमा प्रष्ठापित भएबाट पनि यसअप्टमी व्रतको



चित्र नं. २
ललितपुरस्थित रुद्रवर्ण महाविहारको धर्मागार गुम्वामा प्रष्ठापित
श्रीअमोघपाश लोकेश्वर



चित्र नं. ३
ललितपुरस्थित हिरण्यवर्ण महाविहारको मूलढोका भित्रको सिरानमा राखेको
शिलाको अमोघपाश-मण्डल

बढी महत्त्व झल्काउँछ । ललितपुरको महत्त्वपूर्ण विहारहरुमा हिरण्यवर्ण महाविहारको धर्मागार गुम्वामा प्रष्ठापित श्री अमोघपाश लोकेश्वरको प्रतिमा (आवरण चित्र नं.१) रुद्रवर्णमहाविहारको धर्मागार गुम्वामा प्रष्ठापित श्री अमोघपाश लोकेश्वरको प्रतिमा (चित्र नं. २) र अक्षेश्वर महाविहारको धर्मागार गुम्वामा प्रष्ठापित श्री अमोघपाश लोकेश्वर प्रतिमाहरु यो देवताको पूजा र व्रत बस्ने उद्देश्यले पनि प्रतिस्थापन गरेको देखिन्छ । यी तीनै मूर्तिको दायाँ बायाँ आर्यतारा र भृकुटी ताराका मूर्तिहरु प्रष्ठापित देखिन्छन् । कलाको दृष्टिकोणले पनि यी मूर्तिहरु निकै राम्रा र उच्चकोटिका छन् । यी तीनै मूर्तिहरुमा सबभन्दा पुरानो करिव ५०० वर्ष पुरानो भएको मूर्ति रुद्रवर्ण महाविहारको श्री अमोघपाश लोकेश्वरलाई मानिन्छ ।[२] अष्टमीव्रतको महत्त्वलाई बढी उजागार गर्न अमोघपाशको पौभाचित्र र अमोघपाश शिला मण्डलहरु बनाउने प्रचलन पनि देखिन्छ । पौभाचित्रको रुपमा श्री अमोघपाश लोकेश्वरको चित्र र मण्डलहरु छाउनी स्थित संग्रहालयमा प्रदर्शनका लागि राखिएका छन् ।अमोघपाश लोकेश्वरका मण्डलहरुमा हिरण्यवर्ण महाविहारको मूलढोका भित्र पस्ने वित्तिकै अर्को ढोका आउनु भन्दा अगाडि ढोकाको सिरानमै शिलाको अमोघपाशमण्डल (चित्र नं. ३) प्रष्ठापित छन् जुन कलाको दृष्टिकोणले अद्धितिय मानिन्छ । यो मूल ढोकामा ईस्वी. सं १८८६ अङ्कित गरिएकोले यो शिलामण्डल पनि त्यही समयमा बनाएर राखिएको देखिन्छ ।

नेपालका बौद्धमार्गी नेवारहरुले विशेप गरी धार्मिक कार्य सम्पन्न गरिने महत्त्वपूर्ण महिना गूँला (श्रावण-भाद्र) धर्म उत्सवको बेलामा विभिन्न विहारवहीलहरुमा प्रदर्शन गरिने अनेकों काष्ठ, सुवर्णका श्री अमोघपाश लोकेश्वरका मूर्तिहरुबाट पनि यस देवताको पूजा, उपासना र व्रत निकै महत्त्वपूर्ण रहेको पुस्ति हुन्छ ।

अष्टमी व्रतको महत्त्वबारे विभिन्न बौद्ध सूत्र, ग्रन्थ, अवदान आदिमा वर्णन गरेको पाइन्छ ।

**(१) बौद्धग्रन्थ ललितविस्तरसूत्रमा अष्टमीव्रतको महत्त्वको वर्णन :**

नेपालका बौद्ध धर्मावलम्वीहरुले नवधर्म, नवग्रन्थ, नवखण्ड वा नवव्याकरणको रुपमा-(१) ललितविस्तर (२) अष्टसहस्रिका प्रज्ञापारमिता (३) गण्डव्यूह (४) सुवर्ण प्रभास (५) लंकावतार (६) दशभूमिका (७) समाधिराज (८) सद्धर्मपुण्डरिक (९) तथागत गुह्यक, गरी जम्मा नौवटा ग्रन्थलाई मान्यता दिइन्छ। यी मध्ये ललितविस्तर: सूत्रको विभिन्न अध्यायहरुमा अष्टमी व्रतको चर्चा गरी व्रतको महिमाबारे उल्लेख गरेको पाइन्छ। यस सूत्रको 'गर्भ संधारण परिवर्त:' अध्यायमा सिद्धार्थ गौतमले आफ्नो धर्मपत्नी यशोधरालाई 'अव तिमी गर्भवती भयो, अष्टमी व्रत बस्ने नछोडनू' भनी अष्टमीव्रत धारण गर्ने निर्देशन दिनु भएको वर्णन पाइन्छ।[३] यस सूत्रको 'गोपतीर्थ परिवर्त:' अध्यायमा यशोधरा र उनीकै सखी मनोधरा दुवैले श्री त्रिरत्नको अनुस्मरणमा धारणिपाठको साथै षट्इन्द्रियलाई वशमा राखी श्रीअमोघपाश लोकेश्वरको ध्यान गरी जगत उद्धार गर्न सकोस् भन्ने अष्टमीव्रत बसेको वर्णन पाइन्छ।[४] यसरी यशोधरा महारानी र मनोधरा सखी आठ अंग सहित भएको अष्टांग उपोषथव्रत धारण गरेका थिए।[५]

यस सूत्रको 'यमनियम शुचिशान्ति परिवर्त:' अध्यायमा भिक्षुकलाई घात गरेको पाप चवन्न वर्ष सम्म लाग्छ भने सन्यासी ब्राम्हणलाई घात गरेको पाप बाह्रवर्ष सम्म लाग्छ र दिनै पिच्छे उपोषथव्रत धारण गरेर चैत्यविंवलाई पूजा गरी इन्द्रियलाई वशमा राखी नित्य जप ध्यान गरेको खण्डमा यी घातक गरेको पाप मोचन हुन्छ भन्ने उपोषथव्रतको महत्त्वलाई दर्शाइएको छ।[६]

**(२) आर्य गुणकारण्डव्यूह सूत्रमा अष्टमी व्रतको महत्त्वको वर्णन :**

नेपालको बौद्धधर्म अन्तर्गत महायानका विभिन्न सूत्रहरुमध्ये आर्य गुणकारण्डव्यूह सूत्र पनि एक महत्त्वपूर्ण सूत्रको रुपमा मानिन्छ। ग्रन्थमा उल्लेख भए अनुसार यो सूत्रमा विवरण गरेका धर्मदेशना गुरु उपयुक्त भिक्षुले भारतका मौर्यवंशीय सम्राट अशोकलाई पाटलीपुत्रको कुक्कुटाराम



चित्र नं. ४
नालाको श्रृष्टिकान्त लोकेश्वर

विहारमा धर्मोपदेश गर्नु भएको थियो । संपूर्ण सूत्रमा अवलोकितेश्वरको दिनचर्या, अष्टमीव्रतको पालन र अविची नरकका प्राणीहरु र प्रेतहरुलाई उद्धार गरेको कार्यको वर्णन पाइन्छ । यस ग्रन्थको 'त्रिरत्न भजनानुशंसा' अध्यायमा व्रतमध्ये उपोषथव्रत, अष्टमीव्रत सर्वोत्तम भनी मुनीश्वरले आज्ञा भएको र निर्वाणको कामना गर्नेले विधिविधान अनुसार अष्टमीव्रत धारण गरेको फल त्रिरत्न भजन गरे बराबर हुने भनी यस व्रतको महत्त्व देखाएको छ ।[७] यसै अध्यायमा गुरु उपगुप्तले सम्राट अशोकलाई आठ प्रकारका विधिले संयुक्त भएको उपोषथव्रतको वर्णन दिएको छन् । यस्मा पहिले श्री अमोधपाशलोकेश्वरको मण्डललाई रंगाई विधिविधान अनुसार मण्डल पूजागरी प्रतिष्ठा गर्ने । त्यसपछि गुरुपूजा, त्रिरत्न पूजा र लोकेश्वर गणसहित मण्डललाई मन, वचनले आराधना गरी अर्ध, पाद्य, पुष्प, धूप, दिप, नैवद्य, सुन, चाँदी, टिका, फूल, पञ्चामृत चढाई अष्टाङ्ग प्रणाम गर्ने । साथै यस्को पुण्य भावले संसारका सबै प्राणी सुख आनन्द होस् भनी प्रार्थना गरी मण्डलको विसर्जन गर्ने । पूजा सकेपछि पञ्चामृत भोजन गर्ने भनी श्री अमोघपाश लोकेश्वरको अष्टमीव्रतको विधिविधान र पुण्य प्रशंसा बारे उपगुप्त भिक्षुले अशोक महाराजलाई आज्ञा भएको विवरण यस अध्यायमा पाइन्छ ।[८]

यस सूत्रको 'सर्वाकार सर्वसत्व प्रवोधन सद्धर्म सञ्चारण' अध्यायमा पनि आर्य उपोषथको महिमाको चर्चा पाइन्छ । व्रतको राजा भएको अष्टमीव्रत धारण गर्दा संसारका प्राणीहरुको पहिलेको जन्मको (भूत) अहिलेको जन्मको (वर्तमान) र पछिको जन्मको (भविष्य) कल्याण हुनेछ । त्रिरत्नको शरणमा गई जस्ले आर्य अष्टमीव्रतको चर्या गर्छ यस्को सुमेरु पर्वत समान भएको पाप वा पञ्चमहापापबाट पनि सदा सर्वकाल मुक्त हुने विवरण यस्मा पाइन्छ ।[९]

यस सूत्रको 'दुर्दान्त दानव बोधन बोधिचर्यावतारण' अध्यायमा दैत्यहरुलाई अष्टमीव्रत धारण गराएर उद्धार गरेको वर्णन छ ।[१०] सिंहलद्वीपस

राक्षसीगणपिंत बोधयाना बिज्याग' अध्यायमा आर्यावलोकितेश्वरले कामरुप पुरुपको भेपमा राक्षसी गणहरुलाई अष्टाङ्ग उपोषथ अष्टमीव्रत धारण गर्न लगाई उद्धार गरी सद्धर्मचर्याको महत्त्व वर्णन गरेको पाइन्छ ।[११] यसरी यो आर्यगुणकारण्डव्यूहका अवलोकितेश्वरले प्राणी हितार्थको लागि अनेक रुप धारा गरी श्री अमोघपाश लोकेश्वरको मण्डल पूजा गराई अष्टमीव्रत गराएको बाट पनि यस व्रतको महत्त्व धेरै र प्रशंसा योग्य भएको देखाइन्छ ।

**(३) दीर्घ रथा वदानमा अष्टमी व्रतको महत्त्वको वर्णन** :

नेपालको बौद्ध अवदान ग्रन्थहरुमा पनि अष्टमीव्रतको उल्लेख पाइन्छ । 'दीर्घ रथा वदान' ग्रन्थमा उल्लेख भए अनुसार नागिरीपुर (नालादेश) का अधर्मि राजा दीर्घरथको अकुशल कर्मले जनताले निकै दु:खकष्ट भोग्नु पर्ने देखेर करुणाका खानी करुणामयको वचन अनुसार सुधर्मा देवीले नागरीपुर का जनता, राजा, रानी सबैलाई अष्टमी व्रत धारण गर्न लगाइएकी थिइन् । यसमा अष्टमीव्रतको महत्त्वलाई जनाउँदै यो व्रत धारण गरे पछि देशमा रोगव्याधि नाश भई जलवृष्टिद्वारा मंगल हुन गयो ।[१२]

**नाना व्याधि महापापं क्षण शान्ति भविश्यान्ति ।**
**शीध्रं भवति सुभिक्षं जलवृष्टि सुमंगलै ॥**
**दीर्घरथा वदान**

अहिलेसम्म पनि बौद्ध नेवारहरु नाला करुणामय श्रृष्टिकान्त लोकेश्वर (चित्र नं ४) स्थान गएर अष्टमीव्रत धारण गर्ने प्रचलन पाइन्छ ।

**(४) तीर्थ सेवा महात्म्यमा अष्टमीव्रतको महत्त्वको वर्णन** :

विभिन्न तीर्थ सेवा महात्म्य ग्रन्थहरुमा पनि अष्टमी व्रतको बारेमा वर्णन गरेको पाइन्छ । यी ग्रन्थहरुमा श्रीमद्अमोघपाश लोकेश्वरको अष्टशील पालना गर्नाले असंख्य देव, यक्ष, गन्धर्व, किन्नर एवं नागराजहरु उद्धार भई सुखावती भुवनमा वास गर्न पाएको उल्लेख गरेका छन् ।[१३]

बौद्ध जगत्मा यो उपोषथव्रत धारण गर्नाले रोगीहरु रोग निर्मुल हुन्छ निर्धन धनवान हुन्छ, निसन्तानले सन्तान पाउँछ भन्ने ठूलो विश्वास

गरिन्छ । व्रत धारण गर्ने कममा पनि गुरुले व्रतालुहरुलाई व्रतको महत्त्व दर्शाउँदै उपर्युक्त कुराको स्मरण गराउँछ । यस्को साथै अष्टमीव्रत धारण गर्न वेलामा भगवान् बुद्धले प्रतिपादन गर्नु भएको अष्टाङ्गिक मार्गअन्तर्गत सम्यक शील, ध्यान र समाधि स्वत: पालन हुने हुनाले यस व्रतको महत्त्व झन् बढेको देखिन्छ । अत: बौद्ध जगत्मा श्री अमोघपाश लोकेश्वरलाई ठूलो ज्ञानवर्धक र जगत् उद्धार गर्ने देवताको रुपमा पुजिन्छ ।

**(ख) व्रतको उद्देश्य :**

मानिसहरु द्वारा गरिने जुनसुकै धार्मिक, सामाजिक, सांस्कृतिक, आर्थिक वा राजनैतिक कार्यहरुको कार्यान्वयन कुनै न कुनै उद्देश्यद्वारा प्रेरित भएर नै गरेको हुन्छ । कुनै भित्री इच्छा, आकांक्षा वा चाहनाको परिपूर्तिका लागि नै मानिसहरु क्रियाशील भइरहेको हुन्छन् ।

बौद्धमार्गी नेवार समाजमा प्रचलित अष्टमीव्रत वा उपोषथव्रतको उद्देश्यबारे विभिन्न बौद्ध सूत्र, ग्रन्थ र अवदानहरुमा उल्लेख गरेको पाइन्छ । व्रतकथाहरुमा पनि व्रतालुहरुले कुनै न कुनै उद्देश्यपूर्तिका लागि अष्टमीव्रत धारण गरेको पनि वर्णन पाइन्छ । अष्टमीव्रत बस्दा अहिले पनि व्रतालुहरुले आफ्नो आफ्नो इच्छा, आकांक्षा परिपूर्तिको लागि व्रत धारण गरेको देखिन्छ । हुनत यो व्रत धारण गर्ने क्रम मै गुरु पुरोहितले व्रतालुहरुलाई व्रतधारण गरेको पुण्य फलको प्रशंसा गरी निरोगी हुने, धनप्राप्ति हुने, निसन्तानले सन्तान प्राप्त हुने देशना गरिन्छ । त्यसैले साधारणतया व्रतालुहरु उपर्युक्त भौतिक सुखको साथै निर्वाणको कामना राखी व्रत धारण गरेको पनि पाइन्छ ।साथै विभिन्न तीर्थहरुमा गएर व्रतबस्ने क्रममा गुरुपुरोहितले भनिने व्रततीर्थ कथा, जातक र अवदान कथाको माध्यमबाट पनि व्रतालुहरुलाई सत्मार्ग तर्फ उत्प्रेरित गराउने उद्देश्य महत्त्वपूर्ण मानिन्छ ।वास्तवमा नेवार बौद्ध समाजमा प्रचलित अष्टमीव्रत धारण गर्नुको मुख्य उद्देश्य प्राणी हितार्थको लागि आफूलाई समर्पित हुने प्रतिज्ञा गर्नुलाई नै मानिन्छ । यस्को साथै भगवान् बुद्धद्वारा प्रतिपादित उपदेशको अनुसरण र आर्यअष्टाङ्गिक

मार्ग अन्तर्गत सम्यक ध्यान, समाधि, प्रज्ञा र शीलको पूर्ण प्रतिपालन गर्नुलाई पनि यस व्रतको उद्देश्य मानिन्छ। जसरी महाकरुणाले प्रेरित भएर बोधिसत्वले शील, समाधि र प्रज्ञा यो तीनै शिक्षा पूरा गरेर सम्यक सम्बोधी ज्ञान प्राप्त गर्न सफल हुन्छन् त्यस्तै सबै मानवले उक्त बोधिज्ञानको मार्गमा जानु उत्तम मानिन्छ। अतः अष्टमीव्रत रुपी उपायद्वारा परमार्थ सत्यलाई लाभ गर्ने उद्देश्य यस व्रत लिनुमा मानिन्छ।

अन्तमा यसरी व्रतको पहिलो चरणमा त्रिरत्न सहित पञ्चशीलादि ग्रहण गरी दान, शील, प्रज्ञा र समाधिभावना बलियो पारी श्रावक र बोधिचर्या वा महायान चर्या अनुसार पारमिता पूरा गरी वज्रयान अनुरुपद्वारा क्रिया, चर्या योग द्वारा अनुत्तर ज्ञान, परमार्थ सत्य र निर्वाण हासिल गर्ने पद्धतिलेनै यस व्रतको महत्त्व र उद्देश्य विस्तारित गरेको देखिन्छ।

***पाद टिप्पणी***

१. *D.R. Regmi, **Medieval Nepal, Part II**,(Calcutta : Firm K.L. Mukhopadhyay. 1966) Pg. 687.*

२. *ललितपुर निवासी प. हेमराज शाक्य संगको अन्तरवार्ताबाट जानकारी प्राप्त भएको।*

३. *पं. निष्ठानन्द वज्राचार्य (भाषानुादक र संग्रहकर्ता), ललितविस्तर : सूत्र , (नेपाल, ललितपुर : युवक बोद्ध प्रकाशन, ने. सं. १०९८) पृष्ठ १५८*

४. *उही पृष्ठ १७५*

५. *उही*

६. *उही पृष्ठ ५८५*

७. *पं. जोगमुनि वज्राचार्य (भाषानुवादक) आर्य गुणाकारणडव्यूह सूत्र (ललितपुर, चाकुपाट : नागार्जुन बौद्ध अध्ययन संस्थान, नें. सं. १११७) पृष्ठ ६*

८. *उही पृष्ठ ८*

९. *उही पृष्ठ ७९*

१०. *उही पृष्ठ ९१*

११. *उही पृष्ठ २५१*

१२. *रत्नकाजी वज्राचार्य, निपू-अवदान, (नमोबुद्ध व नालाया बाखँ), (यँ, षदक्षरि महाविहार : बृद्धिमान शाक्य, ने. सं. १११६) पृष्ठ २७-४५,*

१३. *धर्मरत्न, यशोधर, नेपालय् लोकेश्वरया महत्त्व, अंक १ (ललितपुर, बुबहाल, गावहाल : यशोधर समाज सेवा परिषद, लोकेश्वर विशेषांक : वि. सं. २०५४) पृष्ठ १७-१८*



अध्याय-छ

# अष्टमीव्रतका उपास्य श्रीअमोघपाश लोकेश्वरको मण्डल-ध्यान र स्वरूप

बौद्धधर्म, संस्कृति र व्रतोपासनाको परम्परामा श्री आर्याअमोघपाश लोकेश्वरको ठूलो स्थान छ । अवलोकितेश्वर, षड्क्षरी लोकेश्वर जस्तै अमोघपाश लोकेश्र पनि अमिताभ तथागतको कुलबाट उत्पत्ति भएको मानिन्छ । अष्टमीव्रत धारण गर्ने वेलामा अमोघपाशलाई संपूर्ण लोकेश्वरको प्रतिनिधिको रुपमा पूजा, उपासना गरिन्छ । अष्टमीव्रत कथा, अमोघपाश पूजा विधि ग्रन्थ र अमोघपाश लोकेश्वरकै विभिन्न प्रतिमा, पौभा चित्र र मण्डलको आधारमा श्री अमोघपाश लोकेश्वरको मण्डल-ध्यान र स्वरुपबारे राम्ररी जानकारी हुन्छ ।

**(क) मण्डल-ध्यान र स्वरुप :**

अष्टमीव्रत वा उपोपथव्रत बस्ने सबै व्रतालुहरुले श्री अमोघपाश लोकेश्वरको मण्डलको ध्यान गर्न अति आवश्यक हुन्छ । सबभन्दा पहिले यंकार वीजद्वारा उत्पत्ति भएको वायुमण्डल धनुष आकार नीलवर्ण पता:को चिन्ह ध्यान गरिन्छ । यस्को माथि रक्तवर्ण अग्निमण्डल, जलमण्डल, पृथ्वीमण्डल उत्पत्ति भई सप्तरत्न संयुक्त भएको सुमेरु मण्डलको ठाउँ ठाउँमा चन्द्रसूर्य वज्रको चिन्ह र बहुमूल्य हेरामोतिले सुसजित पूर्ण चन्द्रमण्डलको न्हींकार वीज प्रकाशमानमा श्री अमोघपाशको चिन्तना र ध्यान गरिन्छ । कोटिचन्द्रमाको तेजले युक्त भएको कामरुप सोहृबैसले पूर्ण शरीरमा तपस्वीभेप धारण गरी करुणा कोमल दृष्टिले परिपूर्ण रुप देखिन्छ ।[१] लोकेश्वरको ध्यान संम्वन्धी विवरण साधनमाला, निष्पन्न योगावति, स्वयम्भूपुराण आदि ग्रन्थहरुमा पनि पाइन्छ । श्री आर्यअमोघपाश लोकेश्वर श्वेतवर्ण, एक मुख र अष्ट भूजाहरु भएको पातपीताम्वरको वस्त्र लगाई अष्ट-आभूषणले शुसोभित करुणाधारी देवता हुन् । जटा मुकुट माथि

अमिताभ तथागत शिरमा धारण गरी विभिन्न आभूषण र आयुधहरु लिएको श्री अमोघपाश लोकेश्वरको दाहिने हातहरु क्रमश: अभयरत्न समातेर षड्गति (देव, दैत्य, मनुष्य, तिर्यक, प्रेत एवं नरक) लोकका सर्वसत्व प्राणीहरुलाई दया करुणा राखी अभय वरदान रुपी अभयमुद्रामा, दोस्रो हातले चिन्तामणि रत्न समातेर सर्वसत्व प्राणीहरुले इच्छाएको वरदान दिने गरी वरदमुद्रामा, तेस्रो हातले शुद्ध फटिकको १०८ गोला भएको जपमाला, चौथो हातले करुणारुपी श्री पाश (डोरी) धारण गराई चित्रण गरेको हुन्छ। मूर्तिमा जपमाला लिएको अर्थ व्रतालु सबैलाई षडक्षरीको "ॐ मणि पद्मे हुँ" मन्त्र दान गरी संपूर्ण पापक्लेश हरण गर्ने र करुणारुपी श्री पाशले दु:खको सागरमा डुवेका प्राणीहरुलाई सुखावती भुवनमा तानेर लग्ने प्रतीक स्वरुप देखाइएको छ। देब्रे हातहरुले क्रमश: अमृतजलले परिपूर्ण कलश, एक हजार पत्ता भएको कमलको फूल, तीन हाङ्गा भएको त्रिदण्ड (त्रिशुल जस्तो) र सपूर्ण तन्त्रमन्त्र र ज्ञानका मूल ग्रन्थ शास्त्र श्रीप्रज्ञापार मिता धारण गरी देवतालाई स्थानक मुद्रामा चित्रण गरिएको पाइन्छ। यसरी श्रीआर्यअमोघपाश लोकेश्वरको स्वरुप दर्शाइ संपूर्ण अङ्ग प्रत्यङ्गमा षड्गतिका सर्वसत्व प्राणीहरुको उद्धारका लागि विभिन्न अलंकार र आयुधहरुले सुशोभित गराइएको देखाइन्छ। मुख्य मुख्य विहारहरुमा स्थापित सबै जसो अमोघपाश लोकेश्वरको दायाँ वायाँ तर्फ आर्यतारा र भृकुटीताराको मूर्तिहरु प्रतिस्थापन गरिएको हुन्छ। दुवै मूर्तिहरुमा दाहिने हातहरु अभयमुद्रामा छन् भने देब्रे हातहरुले कमलको फूलहरु समातेर बसेको मुद्रामा चित्रण गरेको पाइन्छ (आवरण चित्र नं. १)

श्रीआर्यअमोघपाश लोकेश्वरका मूर्ति र मण्डलहरु काष्ठ, धातु, शिला र पौभा चित्रको माध्यम बाट पनि सिर्जना गरी प्रदर्शन गरिएको पाइन्छ।

ललितपुर गुइत: टोलको पद्मोच्च श्री महाविहारमा गुँला उत्सवमा प्रदर्शन गरिने श्री अमोघपाश लोकेश्वर सहितको 'धञ्जल्याहिति' (धर्मञ्जय यात्रा हिति) का मूर्ति कला र संस्कृतिको दृष्टिले उल्लेखनीय मानिन्छ (चित्र नं ५)



चित्र नं. ५

ललितपुर गुइत:टोलको पद्मोच्चश्री महाविहारमा
गुँलापर्वमा प्रदर्शन गरिने श्रीअमोघपाश लोकेश्वर
सहितको धञ्जल्या हिति

यी मूर्ति ने. सं. ७८२ मा बनाइएका काष्ठका कलाकृति हुन् जस्को दर्शन र पूजन गर्ने परम्परा अहिले सम्म पनि देखिन्छ ।[२] गुँला (श्रावण-भाद्र) मा बहियः हेर्न जाने क्रममा यो अमोघपाश लोकेश्वर सहितको धञ्जलाहिति दर्शन गर्न छोड्न नहुने जनविश्वास पाइन्छ । यस अमोघपाश लोकेश्वरको दाहिने हातहरु कमशः अभयमुद्रा, वरवमुद्रामा, अर्को दुइहातहरुले जपमाला र श्री पाश समातिएको छ भन्ने देब्रे हातहरु कमशः पुस्तक, त्रिदण्ड, कमल र कमण्डलु समातेको देखाइएका छन् । यस मूर्तिको दायाँ वायाँ आर्यतारा र भृकुटीताराका मूर्तिहरु पनि प्रदर्शनका लागि राखिएका छन् ।

श्रीआर्यअमोघपाश लोकेश्वरका मूर्तिहरुमा स्वयम्भू संग्रहालयमा प्रदर्शनका लागि राखिएका अन्दाजी सोह्रौं शताब्दीको श्रीअमोघपाश लोकेश्वर को शिलाको मूर्ति पनि दर्शनीय छन् । विभिन्न आयुधहरुले सजिएको यो मूर्तिको पनि आफ्नै विशेपता झल्केको पाइन्छ (चित्र नं ६) । छाउनीको राष्ट्रिय संग्रहालयमा राखेको ने. सं. ८०१ (सत्रौं श.) ११० से.मि X ८३ से.मि को श्रीअमोघपाश लोकेश्वरको पौभा चित्र पनि दर्शनीय छन् । यो पौभा चित्र उपोपथव्रत बसेको बेलाको संस्मरण स्वरुप बनाइएको देखिन्छ । किनभने मण्डलको सबभन्दा तल्लो भागमा रातोवर्णको अवलोकितेश्वरको दायाँ वायाँ उपोपथव्रत धारण गरिरहेका व्रतालुहरुको साथमा वज्राचार्य पुरोहितले अग्नी प्रज्वलित गरी व्रतोपासना गरिरहेको दृश्य अङ्कित छ । यस पौभा चित्रको बीच भागमा श्रीआर्यअमोघपाश लोकेश्वर श्वेतवर्ण, अप्टभूजा र कमलको फूलमाथि स्थानक मुद्रामा चित्रण गरिएका छन् । अप्टभूजाहरुमा अभयमुद्रा, वरदमुद्रा, श्रीपाश, जपमाला, त्रिदण्ड, पुस्तक, श्वेतकमल र कलश समातिएको छ । मण्डलको विचबाटको पहिलो वृत्ताकार घेरा भित्र मैत्रेय, मञ्जुघोप, वज्रपाणि, क्षितिगर्भ, आकाशगर्भ, सर्वनिवूरणविप्कम्भि, समन्तभद्र र गगनजङ्को साथमा बीस जना बोधिसत्व चित्रण गरेका छन् । त्यसपछिको वृत्ताकारभित्र बीसजना बुद्ध र चारजना ताराका चित्रहरु छन् । त्यसपछिको चक्राकार भागमा अप्टमंगल र चारदिशामा आठजना देवताहरु

इन्द्र, वरुण, कुवेर आदिका चित्रहरु चित्रण छ। मण्डलको माथिल्लो भागको चारैतिर दुईजना ताराको साथमा अवलोकितेश्वरका बाह्र रुपहरु व्यवस्थित ढंगले चित्रण गरिएको छ । मण्डलको दाहिने भागमा हरिहरिहरिवाहन लोकेश्वर र देब्रे भागमा नृत्यनाथको चित्र छ। मण्डलको सबभन्दा माथि बीच भागमा नीलो वर्णको अक्षोम्य बुद्ध पहेंलो रंगको स्तूपको तलतिर अवस्थित छन्। यसरी पौभा चित्रमा पनि उपोपथव्रत धारण गरेको दृष्यको साथै श्रीआर्यअमोघपाश लोकेश्वरलाई प्रमुख बोधिसत्वको रुपमा चित्रण गरेको देखिन्छ (चित्र नं ७)। त्यस्तै त्यही संग्रहालयमा ने. सं. ९९५ को श्रीअमोघपाश लोकेश्वरको पौभा चित्र पनि महत्त्वपूर्ण मानिन्छ।

उपर्युक्त विवरणबाट नेवार बौद्ध समाजमा श्रीआर्यअमोघपाश लोकेश्वरको आदर्शले निकै प्रभाव पारेको देखिन्छ। त्यसैले यस्का विभिन्न मण्डल र स्वरुपहरु धातु, शिला काष्ठ तथा पौभा चित्रमा समेत अंकित भएको स्पस्त देखिन्छ। अप्टमी व्रत धारण गर्दा यही मण्डल र स्वरुपलाई चित्तमा अनुस्मरण गरी देवताको पूजा र उपासना र ध्यान गरिन्छ।

***पाद टिप्पणी***

१. *पं. हेमराज शाक्य, संक्षिप्त आर्यावलोकित्तेश्वर परिचय, (यल, देवदत्त विहार: हेमराज शाक्य, ने. सं १०८०) पृष्ठ २९*

२. *हेराकाजी वज्राचार्य, गुइत:या वहि विहार सघ, (यल, गुइत: दीपावती पुस्तकालय, ने. सं. ११११) पृष्ठ १९*





चित्र नं. ६
स्वयम्भू संग्रहालयको
शिलाको श्रीअमोघपाश
लोकेश्वरको मूर्ति



चित्र नं. ७
छाउनी संग्रहालयको
श्रीअमोघपाश मण्डलको
पौभा चित्र

अध्याय–सात

# नेपालमा लोकेश्वरको स्थान र अष्टमीव्रतको परम्परा

आधुनिक युगमा बढी प्रचारित र प्रभावकारी धर्महरुमा बौद्धधर्म पनि एक मानिन्छ। नेपालमा बौद्धधर्म अन्तर्गत श्रावकयान, महायान र वज्रयान प्रचलित भए तापनि प्राचीनकाल देखि नै तीनैयान विचमा समन्वयात्मक भावना विकसित भई नेपालको बौद्धधर्म र बौद्ध संस्कृतिले नेपालीहरुको जनजीवनमा धेरै असर पारेको देखिन्छ। बौद्धधर्मका अनेकौं विशेषताहरुमा बोधिसत्व धारण वा सिद्धान्तलाई अत्याधिक महत्त्व दिइएको पाइन्छ। स्वयम्भू पुराण अनुसार नेपालको सृष्टिकथा संग आदिबुद्ध स्वयम्भूको ज्योति प्रज्वलित भएको र मञ्जूश्री बोधिसत्वको आगमनसंग सम्बन्ध जोडिएको छ। मञ्जुश्री बोधिसत्वको चन्द्रहाश खड्गको प्रहारद्वारा उपत्यकाको पानीलाई बाहिर निकासा दिएपछि मात्र यो उपत्यका मानिसहरुका लागि बसोबास योग्य स्थल बनेको उल्लेख पाइन्छ।

नेपालको लिच्छविकालिन र मध्यकालिन बौद्ध समाजमा बोधिसत्व वा लोकेश्वरको उच्च स्थान मानिन्छ। लोकेश्वर सम्वन्धी व्रत विशेष गरी श्री अमोघपाश लोकेश्वरको अष्टमीव्रत र यस्को परम्परालाई पनि निकै मान्यता दिइएको छ। बोधिसत्व धारणले बौद्धधर्मलाई निकै फराकिलो र विश्व प्रसिद्ध गराएको छ।

**(क) बोधिसत्व धारणा वा सिद्धान्त :**

बोधिसत्व धारणा वा सिद्धान्त बौद्धधर्मको एउटा महत्त्वपूर्ण आदर्श र विशेषता हो। बोधिसत्वको आदर्श 'बुद्धो बोधेय्यं, तिण्णो तारेय्मं मुत्तो मोचेय्यं' अर्थात म बुद्ध भएर लोकलाई पनि बोध गर्छु, म तरेर लोकजनलाई पनि संसार सागरबाट पार गरिदिन्छु, म मुक्त भएर लोकलाई पनि दुःखमुक्त

गराईदिन्छु भन्ने धारणाले निकै प्रभाव पारेको देखिन्छ। बोधिको अर्थ ज्ञान र सत्वको अर्थ प्राणी हो। त्यसैले बोधिसत्वको अर्थ बोधिज्ञान प्राप्त इच्छुक प्राणी हो, जो संपूर्ण प्राणीमात्रको सेवा र कल्याणको लागि आफ्नो जीवन अर्पण गर्दछ । अर्को अर्थमा बोधिसत्व त्यो साधक हो जो अर्हत् अवस्था पुगेर पनि अथवा आफू निर्वाण प्राप्तिको लागि पूर्ण रुपले सक्षम भएतापनि आफ्नो निर्वाण चाहँदैन । बरु निर्वाणपदलाई स्थगित गरी सारा दु:खी प्राणीहरुको उद्धार गर्न दृढ संकल्प गर्दछन् र मार्ग प्रदर्शक हुन्छ । यस किसिमका चर्यालाई 'बोधिचर्या' र कर्तालाई 'बोधिसत्व' भनिन्छ। अवतम सूत्र अनुसार जवसम्म प्राणीमात्रमा मोक्षको इच्छा रहिरहन्छ तवसम्म प्राणीहरुबाट अलग हुन भने बोधिसत्वको भावना हुन्छ। त्यसैले सद्धर्मपुण्डरीका सूत्रमा बोधिसत्वलाई 'महासत्व' भनिएको हो। बोधिसत्वले आफ्नो अचिन्त्य उपायकौशल्यज्ञान "सर्वजन हिताय सर्वजन सुखाय" भन्ने आदर्शलाई राम्ररी पालना गरी सधैं प्राणीउपर करुणा राखि उनीहरुको सुख र शान्तिको लागि दत्तचित्त भएको हुन्छ । पछि गएर प्रज्ञा भन्दा करुणाको विशेष स्थान हुँदा बोधिसत्वको महत्त्व पनि बढ्दै गई बोधिसत्वलाई करुणाको प्रतीक स्वरुप मानिन थालियो ।

ऐतिहासिक कथन अनुसार बोधिसत्व वा लोकेश्वरलाई चिन्तन र स्मरण गरी नाम लिने प्रचलन मौर्य सम्रात अशोकको समयमा महासंघिकहरुले सबभन्दा पहिले चलाएको हो । महावस्तु अवदान अनुसार इ.पू. दोस्रो शताव्दी भन्दा अगाडी प्राणीहितका लागि अवलोकन गर्ने बोधिसत्वलाई अवलोकितेश्वरको रुपमा प्रतिष्ठित भई मान्यता दिइसकेको थियो । अवलोकितेश्वरको सबभन्दा पहिलो उल्लेख १४८ इ. देखि १७० इ. भित्रमा चिनियाहरुले अनुवाद गरेको सुखावती व्यूह ग्रन्थमा पाइन्छ ।[१]

**(ख) लिच्छविकाल :**

नेपालमा लोकेश्वरको प्राचीनता र यसको ऐतिहासिक पृष्ठभूमि धेरै पुरानो भएको कुरा पुरातात्विक साधनद्वारा सिद्ध हुन्छ ।[२]

लिच्छविकालिन नेपालमा लोकेश्वरको पूजा उपासना गर्ने प्रचलन चलेको कुरा त्यसवेला बनेका विभिन्न लोकेश्वरका प्रतिमाहरुबाट स्पस्ट हुन्छ। पुरातात्विक दृष्टिकोणबाट बोधिसत्वको इतिहास इसाको दोश्रो शताव्दीको राष्ट्रिय संग्रहालय छाउनीमा राखिएको यक्ष बोधिसत्वको मूर्तिले देखाउँछ।[३] लिच्छविकालमा रामदेवको पालामा उपासक मणिगुप्तकी श्रीमती महेन्द्रमतीले गणवहा ल्वँहहितिमा अवलोकितेश्वरको स्थापना गरेकी थिइन।[४] त्यस्तै द्वाखावहा, चायवहिल, श्री धःविहार, यम्पी विहार, मयूरवर्ण महाविहार, यंगुवहाल, राष्ट्रिय संग्रहालय छाउनीका पद्मपाणी लोकेश्वरका मूर्तिहरु महत्त्वपूर्ण मानिन्छन्। यसकालका कुनै कुनै अभिलेखहरुमा बोधिसत्वको वर्णन गरिएको पाइन्छ। अंशुवर्माको समयको अभिलेख हाल भण्डारखाल पाटन संग्रहालयमा सुरक्षित रहेको छ। त्यस्मा प्रारम्भमा बोधिसत्वको वर्णन साथै प्रणिधि विहारमा अंशुवर्माले पानी ल्याइदिएको कुराको उल्लेख पाइन्छ।[५] यस समयको ललितपुर, त्यागल टोलको चैत्यमा रहेको अभिलेखमा पनि बुद्ध, बोधिसत्व समन्तभद्र, मैत्रेय, मञ्जुश्री, पद्मपाणी लोकेश्वरको उल्लेख पाइन्छ। त्यस्तै यसकालका राजा जयदेव द्वितीयले पशुपतिको अभिलेखमा अष्टकमलको वर्णनको प्रसंगमा 'पद्मं किं करुणाकरस्य करतो लोकेश्वरस्यागतं॥' अर्थात् करुणामय लोकेश्वरको हातबाट आएको कमल पो यो हो कि ? भन्ने उल्लेख गरेको छ।[६] यी विभिन्न उल्लेखहरुबाट लिच्छविकालमा लोकेश्वर पूजनीय रहेको र समाजमा उच्च स्थान ओगटेको कुरा देखिन आउँछ। हुनत श्रीअमोघपाश लोकेश्वरको उल्लेख यसकालमा कतै नभएता पनि अवलोकितेश्वरको एक प्रमुख रुप श्रीअमोघपाश लोकेश्वर लाई मान्न सकिन्छ।

### (ग) मध्यकाल :

मध्यकाल बौद्धधर्म र बौद्ध संस्कृतिको पुनरुत्थान काल थियो। त्यसबेला नेपालमा बौद्धधर्मको राम्रो स्थिति रहेको कुरा धेरै प्रमाणबाट स्पस्ट हुन्छ। लिच्छविकालमा लोकेश्वरका अनेकौं मूर्तिहरुको निर्माण, पूजा र उपासना

गर्ने प्रचलन बढी मात्रामा देखिएतापनि श्रीअमोघपाश लोकेश्वरलाई पूजा, उपासना गर्ने परम्परा मध्यकालमा मात्र बढी रुपमा प्रचार भएको देखिन आउँछ ।[७] श्रीअमोघपाश लोकेश्वरको पहिलो उल्लेख भएको ग्रन्थ केशर लाइव्रेरीमा राखिएको ने.सं. ४८१ को आर्यअमोघपाश सूत्रःलाई मानिन्छ ।[८] मध्यकालमा बौद्ध देवीदेवताहरुको मूर्तिहरु पौभा चित्रमा पनि उतार्ने निकै प्रचलन भएको देखिन्छ । यस प्रसंगमा प्रतापदित्य पालले आफ्नो पुस्तक Oriental Art मा श्रीअमोघपाश लोकेश्वरका तीनवटा पौभा चित्रहरु वर्णन गरेका छन् । ती पौभा चित्रहरु कलकत्ताको Rama Krisna Mission Institute of Culture को ने.सं. ५५० अङ्कित पौभा चित्र, Leiden Museum को ने. सं. ५५६ अङ्कित पौभा चित्र[९] र एउटा एकजना अमेरिकनको संरक्षणमा रहेको पौभाचित्र ।[१०] अमोघपाशको व्रत सम्वन्धी धेरै जसो ग्रन्थहरु मध्यकालका ग्रन्थहरुका प्रतिलिपिहरु हुन् । अमोघपाश लोकेश्वरको मण्डल पूजा अष्टमीव्रत धारण गर्ने वेलामा बाहेक शाक्य, वज्राचार्यहरुको संस्कार पर्व र वज्राचार्यहरुको आचार्य दिक्षामा पनि गरिन्छ । मध्यकालमा शुक्लाष्टमीको उपोषथव्रत बस्ने प्रचलन सामान्य थियो ।[११] उक्त दिन व्रतालुहरु कसैले एक छाक कसैंले दिनभरी नै खाना नखाई व्रत बस्ने गर्दथे किनकी त्यो दिन व्रतालुहरुले जुन देवताको नाममा व्रत वसेको हो उनलाई खुसी पार्न धार्मिक ग्रन्थहरु पठनपाठन गरी बिताउने गरिन्थ्यो । [१२] उत्तर मल्लकालमा पनि अमोघपाशलोकेश्वरको पूजा गर्ने र मूर्ति प्रतिस्थापन गर्ने चलन थियो । त्यसबेलाको पाटन चाकवहाल टोल, ज्याठाबाहा वहिल बाहिर पाटीको अभिलेख मा 'ॐ नमो आमोघपाश लोकेश्वराय ॥ ८३३ जेष्ठ शुकषप्टमी अगवार कुन्हु प्रतिष्ठा दिन ॥' भन्ने वर्णन पाइएकोले त्यसवेला श्रीअमोघपाश लोकेश्वरको नेवार बौद्ध समाजमा ठूलो आस्था थियो भन्ने ज्ञान हुन्छ ।[१३]

पाटन चाकवहाल टोल ज्याठाबाहा वहिल बाहिर पाटीको अभिलेख

## मूलपाठ

१. ॐ नमो आमोघपाशलोकेश्वराय ॥ ८३३ जे-
२. ष्ठ शुक्र पष्टमि अगवार कुन्हु प्रतिष्ठा दिन ॥ शुभ
३. श्रयोस्तु ॥ सम्वत् ८३२ भाद्रपद शुक्ल ॥
४. अप्टम्यान्तिथौ ॥ ज्यतनक्षत्र । प्रितिपयोग । वृहप-
५. तिवार ॥ थ्व कुन्हु ॥ ज्याथवाहार ॥ वहिरि य
६. छेया रन्हसिंह ॥ भावो । परुसिंह भावो । ल्व
७. युराम ॥ भावो । पुत्र ॥ रत्नकि राम । भावो ॥ ल-
८. क्ष्मी राम भावो । धनसिंह भावो । विश्वरा-
९. म भावो । थनक्वाय अबु समुहन ॥ फरद-
१०. यकं प्रतिथा याङा दिन जुरो । वखु क्र-
११. र्प १ थ्वतेया वरसानन । फं १ सियाफकि-
१२. प २ रा । कुद १ कगु फोया, प्र १ प्वात ॥ भा-
१३. द्रपद शुक्लाया । चतुदसि कुन्हु थ्वते व-
१४. र्पपतीदान पिते मारजुरो ॥ शुभ-
१५. मस्तु ॥

बौद्धमार्गी नेवार समाजमा विभिन्न तिर्थस्थलहरुमा गएर अप्टमीव्रत धारण गरी सकेपछि व्रत पूर्ण भएको उपलक्ष्यमा देवतालाई आभुपणहरु चढाउने प्रचलन पाइन्थ्यो । त्यस्तै उपोपथव्रत पूर्ण भएको उपलक्ष्यमा सम्वत् १०६८ मा केशरत्न तुलाधरले जनवाहाको श्री ३ आर्य्यावलोकितेश्वर लाई हेराफ्व (जन्तर) (चित्र नं. ८) चढाएको थियो ।[१४] त्यसमा निम्न लिखित अभिलेखहरु उल्लेख भएका छन्-

## श्री ३

शुभ सम्वत् १०६८ साल मिति चैत्र गा ९ स-छें. स. द्वादस तीर्थ अस्त वैतराग, प्यम्ह करुणामय, स्वम्ह भगवान्, थुलि थासे व्रत दनापिं म्ह ४४ व्रत धुंकेत सिखः समेत ओह तोला ३३।६ या हेराफ्वः १ श्री ३

आर्य्यावलोकितेशवरयात असं धालसीकोया केशरत्न तुलाधर नं दोहलपा। थुगु पुण्यं षतगतिस चतुर योनि उत्पत्ति जुया च्वंपि सकल सत्वप्राणीपिं सकले भवचक्रं तरेजुया अनुत्तर सम्यक सम्बोधी ज्ञान लाना निवार्ण पद लाना वपिं जुइमा शुभ मंगलं ॥

(अर्थ-शुभ सम्वत् १०६८ साल मिति चैत्र गा ९ स-छे.स. द्वादस तीर्थ अस्तवैगराग, चारजना करुणामय, तीनजना भगवान् यति ठाउँमा व्रत वस्ने ४४ जना, व्रत पूर्ण गर्न सिक्री समेत चाँदी तोला ३३।६ को हेराफ्व: १ श्री ३ आर्य्यावलोकितेश्वरलाई, असन धालसीकोको केशरत्न तुलाधरले चढाइयो। यस्को पुण्यले षतगतिको चतुर योनि उत्पत्ति भएका सबै सत्वप्राणीहरु सबै भवचक्रबाट तरेर अनुत्तर सम्यक सम्बोधि ज्ञान प्राप्त भई निर्वाण पद लाभ होस् शुभ मंगल ॥)

**(घ) बौद्धमार्गी नेवार समाजमा लोकेश्वरको स्थान :**

नेपालको बौद्धमार्गी नेवार समाजमा लोकेश्वरको स्थान महत्त्वपूर्ण मानिन्छ। लोकेश्वर भन्नाले लोकले मानिराखेको वा लोकको ईश्वर भन्ने बुझिन्छ। लोकको उद्धार गर्ने, धारण गर्ने, पालन गर्ने, रक्षा गर्ने इत्यादि विविध गुणहरुले गर्दा बोधिसत्वलाई लोकेश्वरको रुपमा सम्वोधन गर्न थाले। लोकेश्वरले जगत सत्वलाई हितसुख हुने अनुत्तर पद लाभ नहुञ्जेल सम्म स्वयम् बुद्ध नहुने सिद्धान्तमा आधारित प्रतिज्ञा महायान मतानुसार गरेको पाइन्छ। लोकोपकारका दृष्टिले यो ठूलो त्याग र आदर्श हो। त्यसैले लोकेश्वरलाई प्राणी मात्रका लागि सुखशान्ति प्रदान गर्ने महान इच्छा राखी सदासर्वदा पारमिता चर्यामा कोसिस गरिरहने करुणायुक्त बोधिसत्वको रुपमा मानिन्छ।

लोकेश्वरलाई संघनायकको रुपमा पनि मानिन्छ। किनकी बौद्धधर्मको 'त्रिरत्न' मा सम्यकसम्बुद्ध बुद्धरत्न, प्रज्ञापारमिता धर्मरत्न र लाकेश्वर संघरत्नको रुपमा लिइन्छ। लोकेश्वरको संख्या र गुणवर्णन अष्टमीव्रत कथा, सद्धर्मपुण्डरिक सूत्र, नवव्याकरण, गुणकारण्डव्यूह, सुखावतिव्यूह,



चित्र नं. ८
उपोषथव्रत पूर्ण भएको उपलक्ष्यमा जनवाहाको
श्री ३ आर्यावलोकितेश्वरलाई चढाएको हेराफ्व (जन्तर)

कारण्डव्यूह, धर्मसंगिति सुत्र आदि प्राचीन बौद्ध ग्रन्थहरुमा उल्लेख गरेको पाइन्छ। यी ग्रन्थहरुमा १०८ जना (परिशिष्ट नं. १) र ३६० जना (परिशिष्ट न. २) लोकेश्वरहरुको उल्लेख गरेको पाइन्छ। १०८ जना लोकेश्वरलाई अष्टोत्तरशत्त लोकेश्वर पनि भनिन्छ। यी १०८ जना लोकेश्वरहरुको चित्र श्री कनक चैत्य महाविहार (जनवाहा) को मूलदेवता श्वेतमच्छेन्द्रनाथ (जनवाहाद्य:) को प्रतिमा भएको मन्दिरको चारैतिर उत्तरदेखि दक्षिण पूर्व कोणसम्म चित्रण गरेको पाइन्छ। भक्तपुरको चतुर्ब्रह्ममहाविहारमा २२ जना लोकेश्वरहरुको मूर्ति र पाटन हिरण्यवर्ण महाविहारमा १२ महिनाको १२ जना लोकेश्वरहरुको मूर्तिहरु प्रतिस्थापन गरेको पाइन्छ।

बौद्धमार्गी नेवार समाजमा आर्य्यावलोकितेश्वर, मञ्जुश्री, बज्रपाणी, समन्तभद्र सर्वनिवरणविष्कम्भि, क्षितिगर्भ, खगर्भ र मैत्रेयलाई अष्ट प्रमुख बोधिसत्वको रुपमा मानिन्छ। यी बोधिसत्वहरु सर्वसत्व प्राणीहरुको हित र कल्याणको लागि विशेप गुणले सम्पन्न भएको मानिन्छ। बौद्ध परम्परा अनुसार आर्य्यावलोकितेश्वर महाकारुणिक प्रतिमूर्ति, मञ्जुश्री प्रज्ञाज्ञानको प्रतिनिधि, वज्रपाणी ऋद्धिपराकमको अधिकारी, समन्तभद्र अभिन्त्य पूजा सम्भार अभिवृद्धिकर्ता, खगर्भ समासभज्ञानको शिक्षा प्रदाता, सर्वनिवरणविष्कम्भि सबै प्रकारको क्लेश परिशुद्ध गर्न संसार भ्रमण कर्ता, मैत्रेय भविष्यमा मैत्रीधर्म बलले समानता ल्याई सम्वोधिज्ञान प्रदानकर्ता रुपमा प्रख्यात छन्।

बौद्धग्रन्थ कारण्डव्यूहसूत्रमा 'येन येन रुपेन बैनेय सत्वानं तेन तेन रुपेन धर्म्म देशयति' उल्लेख भए अनुसार आर्यावलोकितेशवरले कहाँ कहाँ के के रुप लिई लीला गरेर सत्वप्राणी उद्धार गर्नु पऱ्यो त्यही त्यही अनेक रुप लिई धर्म देशना गरिन्छन्। आर्य्यावलोकितेश्वरका अनेक रुपमध्ये बौद्धमार्गी नेवार समाजमा प्रत्येक महिनामा एक एक लोकेश्वरको नाममा बाह्र महिनामा बाह्रजना(द्वादश) लोकेश्वरको नाममा अष्टमी व्रत बस्ने परम्परा पाइन्छ। किनकी आर्य्यावलोकितेश्वरले संकान्तिको दिनमा आफ्नो

रुप बदलेर अर्को रुपलिई दर्शन दिने धारणा भएको हुनाले प्रत्येक महिनामा आर्य्यावलोकितेश्वरको रुप बदलेको मानिन्छ । त्यसैले बौद्धमार्गी नेवार समाजमा संक्रान्तिको दिनमा लोकेश्वरको दर्शन गर्न जाने निकै प्रचलन पाइन्छ । काठमाडौं उपत्यकाको विभिन्न ठाउँहरुमा द्वादश लोकेश्वरहरु स्थापना भएको र यी लोकेश्वरको नाममा तिथि अनुसार बाह्र महिनामा बाह्रै पटक अष्टमी व्रत बस्न जाने परम्परा बौद्ध समाजमा अद्यापि प्रचलन छ । कार्तिक शुल्काष्टमी (मुखोष्टमी) देखि व्रत वस्ने आरम्भ गरिन्छ ।

**(ङ) द्वादश लोकेश्वरको नाम, स्थान र व्रततिथि :**

| द्वादश लोकेश्वरको नाम | स्थान | व्रततिथि |
|---|---|---|
| १. कारण्डव्यूह लोकेश्वर | ठिमी | कार्तिक शुक्लाष्टमी |
| २. श्री मल्लोकेश्वर | नाला | मंसिर शुक्लाष्टमी |
| ३. हलाहल लोकेश्वर | ख्वप | पौष शुक्लाष्टमी |
| ४. खसर्पण लोकेश्वर | चोवहा: | माघ शुक्लाष्टमी |
| ५. सिंहनाद लोकेश्वर | जनवहा: | फागुन शुक्लाष्टमी |
| ६. पद्मनृत्य लोकेश्वर | तंग:वहा: | चैत्र शुक्लाष्टमी |
| ७. हरिहरिहरिवाहन लोकेश्वर | सकोचंगु | बैशाख शुक्लाष्टमी |
| ८. त्रैलोक्य वशंकर लोकेश्वर | लगंख्य: | जेष्ठ शुक्लाष्टमी |
| ९. रक्त लोकेश्वर | ब्रम्हपुरी | आषाढ शुक्लाष्टमी |
| १०. नीलकण्ठ लोकेश्वर | धालछेँ | श्रावण शुक्लाष्टमी |
| ११. मायाजाल लोकेश्वर | त्वायवहा: | भाद्र शुक्लाष्टमी |
| १२. पदक्षरी लोकेश्वर | बदेगाँ | आश्विन शुक्लाष्टमी |

बौद्धमार्गी नेवारहरुमा बाह्र महिनामा द्वादश लोकेश्वर विराजित स्थानहरुमा मात्र होइन द्वादश तीर्थ स्थान, अष्ट वैतराग विराजित स्थान र चार पवित्र थूरहरुमा गएर पनि अष्टमीव्रत धारण गर्ने प्रचलन पाइन्छ । यसरी प्राचीनकाल देखि नेपालको बौद्धमार्गी नेवार समाजमा लोकेश्वरको महत्त्वपूर्ण स्थान र अष्टमीव्रतको परम्परा पाइन्छ ।

## पाद टिप्पणी

१. मीनवहादुर शाक्य (मूँम्ह), लोकेश्वर स्तोत्रमाला, (यल, नकवहिः थ्याका सुधार समिति, ने. सं. १०९७) पृष्ठ अ
२. पं. हेमराज शाक्य, यशोधर, अवलोकितेश्वर, अंक-१ (ललितपुर, बुबहाल, गावहाल, लोकेश्वर विशेषांक, वि.सं. २०५४) पृष्ठ ३५
३. Pashupati Kumar Dwivedi, Museum in Nepal, (Kathmandu Tangal: 1976) P. 115
४. धनवज्र वज्राचार्य, लिच्छविकालका अभिलेख, द्वितीय संस्करण, (किर्तिपुर : नेपाल र एशियाली अनुसन्धान केन्द्र, त्रि.वि. २०५३) पृष्ठ १७९
५. उही पृष्ठ ३६८-३६९
६. उही पृष्ठ ५८४-५५५
७. John K. Locke, **Karunamaya**, The cult of Avalokitesvara (Nepal, Kathmandu, Sahayogi Prakashan 1980) Pg. 185
८. Luciano Petech. **Medieval Nepal**, (Rome 1958) P. 125
९. Pratapaclitya Pal, **Oriental Art,** 13:21
१०. Pratapaditya Pal. Nepal–where the Gods are young (Los Angeles 1975) P. 37, 75
११. D. R. Regmi, Medieval Nepal, Part II, (Calcutta; Firm K. L. Mukhopadhyay, 1966) P. 721
१२. उही
१३. धनवज्र वज्राचार्य, मध्यकालका अभिलेख, (कीर्तिपुरः नेपाल र एशियाली अनुसन्धान केन्द्र, २०५३ असार)



अध्याय-आठ

# अष्टमी व्रत-विधि

नेपालको बौद्धमार्गी नेवार समाजमा उपल्ला पंक्तिमा मूलत: वज्राचार्य र शाक्यहरु विद्यमान छन् । यी बौद्धमार्गी नेवारहरुको धर्म र संस्कृतिको मूल थलो बौद्ध विहार (वाहा) हो । यिनीहरुले बौद्धधर्म पालन गरी गृहस्थजीवन अपनाई आफ्नो महत्त्वपूर्ण सामुदायिक संस्कार लगायत अरु विभिन्न समाजिक क्रियाकलापको साथै धार्मिकपर्व र अनेक विधिहरुद्वारा व्रतधारण यही बौद्ध विहारहरुमा सम्पन्न गर्ने गर्दछन् । यी बौद्धमार्गी नेवार समाजमा अत्यन्त प्रचलित अप्टमीव्रत व्यक्तिगत र सामूहिक रुपमा धारण गर्ने परम्परा पाइन्छ । व्यक्तिगतरुपमा अप्टमीव्रत धारण गर्दा साधारण किसिमले गरिन्छ भने सामूहिक रुपमा अप्टमीव्रत धारण गर्दा विस्तृत महायान व्रत पूजा विधिविधान अनुसार सम्पन्न हुने गर्दछ । व्यक्तिगत रुपमा अप्टमीव्रत बस्दा व्रतालु आफ्नो विहारमा गएर श्रीअमोघपाश लोकेश्वरलाई अर्घ प्रदान गरी अप्टशील प्रार्थना गरी पूजा र उपासना गरिन्छ । पूजाको कार्यक्रम सकेपछि निरामिप भोजन गर्ने प्रचलन छ । तर, धेरै जसो अप्टमीव्रत व्यक्तिगत भन्दा सामूहिक रुपमै सम्पन्न गरिने प्रचलन पाइन्छ ।

**(क) अष्टमीव्रत सम्पन्न हुने प्रमुख स्थान** :

सामूहिक रुपमा अप्टमीव्रत धारण निम्न प्रमुख स्थानहरुमा सम्पन्न हुने गर्दछन् ।

१. मू: वाहा (मूल विहार)
२. द्वादश तीर्थ स्थल
३. अप्टवैतराग विराजित स्थान
४. ललितपुरका प्राचीन चार प्रमुख थूर (स्तूप)
   (पुल्चोथूर, इवहीथूर, त्रेताथूर र लगनथूर)
५. व्यक्तिगत तथा सामूहिक आवासगृह

जुनसुकै समाजमा पनि आफ्नो आफ्नो धर्म अनुरुप विभिन्न व्रतहरु बेग्लाबेग्लै व्रतविधि विधान अनुसार नै सम्पन्न हुने गर्दछन् । अष्टमीव्रत पनि शुक्लाष्टमीको दिनमा सामूहिक रुपमा उपर्युक्त स्थानहरुमा अष्टमीव्रत विधि ग्रन्थमा उल्लेख भए अनुसार वज्राचार्य तान्त्रिक पुरोहितको निर्देशनद्वारा सम्पन्न हुने गर्दछन्। वि.सं २०५७ आषाढ २५ गते शुक्लाष्टमीको दिनमा सुनय श्री मिश्र संस्कारित यम्पि नाम महाविहारको ठीक अगाडि इवहीथूरमा अष्टमीव्रत उत्सवमा करिव ३०० जना वज्राचार्य, शाक्य, महर्जन र श्रेष्ठ जातिका व्रतालुहरुमा दुइतीनजना पुरुष वाहेक मध्यम उमेरका महिला र २५,३० जना केटीहरुले भाग लिएका थिए । यो अष्टमीव्रत भाष्करवर्ण महाविहार टोल सुधार समिति र वज्राचार्य पूजा विधि अध्ययन समिति नःवही न्याखाचूक पाटनको संयुक्त आयोजनामा संपन्न भएको थियो। हुनत यस व्रत-उत्सवका आयोजकहरुले २०५५ साल मंसीर ११ गते देखि २ वर्ष भित्रमा शुक्लाष्टमीका दिन पारेर पाटनका १८ प्रमुख विहार, काठमाडौं र भक्तपुरका एक एक प्रमुख विहार, पाटनका चार प्रमुख थूर वा स्तूपहरुमा अष्टमीव्रत धारण गर्ने क्रम मै यस इवही थूरमा आएर सामूहिक रुपमा अष्टमीव्रत धारण गर्ने उत्सव मनाएको देखिन्छ (चित्र नं. ९) ।

अष्टमीव्रत धारणका लागि मूलपुरोहित, उपाध्याय पुरोहित र वेताजू पुरोहित जम्मा तीनजना पुरोहितहरुको ठूलो भूमिका रहेको हुन्छ । मूलपुरोहितले श्रीअमोघपाश लोकेश्वरको प्रतिमा मण्डल, पञ्चबुद्ध, अष्टबोधिसत्त्वको प्रतिस्थापन र पूजा गरिन्छ भने उपाध्यायले सबै व्रतालुहरुलाई श्रीबुद्धमण्डल, श्रीधर्ममण्डल, श्रीसंघमण्डलको साथै ठूलोमण्डल वा श्रीआर्यअमोपाश लोकेश्वरको पूजा, ध्यान, जप आदि अष्टमीव्रत पूजा विधिद्वारा एक एक गरी पूजा गर्ने निर्देशन दिइन्छ । वेताजू पुरोहितले पूजाविधि सकेपछि व्रत कथा वाचन गर्ने प्रचलन रहेको छ ।

कुनै पनि पूजा, व्रत, संस्कार पर्व आदि संपन्नका लागि मूलपुरोहितको साथसाथै एकजना जजमान (यजमान वा यज्ञकर्ता) को पनि आवश्यकता

हुन्छ । यस इवहीथूरमा आयोजना गरेको अष्टमीव्रत धारणमा नःवही निवासी पुण्यराज शाक्य जजमानको रुपमा बसेका थिए (चित्र नं. १०) । सबै पुरोहित, जजमान र व्रतालुहरु करिव १० बजेतिर आफ्नो आफ्नो स्थान ग्रहण गरिसकेपछि अष्टमीव्रत पूजाविधि आरम्भ हुन्छ । यस्को संक्षिप्त वर्णन यस प्रकार छ :-

**(ख) मूलपुरोहितद्वारा श्रीआर्यअमोघपाश लोकेश्वरको प्रतिमा, मण्डल, पञ्चबुद्ध, श्रीआर्यावलोकितेश्वर र अष्टबोधिसत्त्वको प्रतिस्थापन र पूजा :**

**रेखात्मक चित्र नं. १**

अष्टमीव्रत धारणमा मूलपुरोहित अगाडि प्रतिस्थापित व्रतस्थल स्वरुप





चित्र नं. ९

ललितपुर इवही थूरमा अष्टमीव्रत धारण

१. अमोघपाशमण्डल
२. श्री आर्यअमोघपाशलोकेश्वर (प्रतिमा)
३. श्रीआर्यावलोकितेश्वर (कलश)
४. मैत्रैय (कलश)
५. गगनगञ्ज (कलश)
६. समन्तभद्र (कलश)
७. वज्रपाणी (कलश)
८. मञ्जुघोष (कलश)
९. सर्वनिवरणविष्कान्भि (कलश)
१०. क्षितिगर्भ (कलश)
११. खगर्भ (कलश)
१२. पञ्चबुद्ध (कलश)

सबभन्दा पहिले मूलपुरोहितले रेखात्मक चित्र नं १ अनुसार धलोटको श्री अमोघपाश लोकेश्वरको मण्डल इवही स्तूपको पूर्वाभिमुख गरी स्थापना गर्दछन् । यस मण्डलको ठीक बाहिरी भागमा मण्डलाई छुने गरी चारैतीर आठवटा एक एक कलश माथि एउटा एउटा किसली (माटोको सानो भाँडामा चामल, सुपारी र द्रव्य राखेको) अष्टबोधिसत्त्वहरुको प्रतीकको रुपमा राखिन्छ । यी अष्टबोधिसत्त्वहरु मैत्रैय, गगनगञ्ज, समन्तभद्र, वज्रपाणी, मञ्जुघोष, सर्वनिवरणविष्कम्भि, क्षितिगर्भ, खगर्भ हुन् । मण्डलको ठीक विच भागमा यस व्रतका प्रमुख देवता श्री अमोघपाश लोकेश्वरको चाँदीको प्रतिमा स्थापना गरिन्छ (चित्र नं. ११) । यस प्रतिमाको शिरमा किसली सहित कलशको प्रतीकको रुपमा बोधिसत्त्वहरुमा प्रमुख आर्यावलोकितेश्वर स्थापना गरिन्छ । मण्डलको ठिक अगाडि बौद्धसंस्कृतिका प्रतीक न्हयाकं( कलात्मक ऐना), धौपती(दही), कलश, गोग्रास(चिउरा, नुन र अधुवा), सिन्हमू(कलात्मक टिका भाँडो) र वली(भात) स्थापना गरिन्छ । यस्को अगाडि बिच भागमा किसली सहित कलशको प्रतीकको रुपमा पञ्चबुद्ध स्थापना गरिन्छ । पञ्चबुद्धहरु वैरोचन, अक्षोभ्य, रत्नसंभव, अमिताभ, अमोघसिद्धिको साथै वैरोचनकी शक्ति बाहेक मामकि, लोचनी, पाण्डूरा र आर्यतारा भएको मानिन्छ ।श्रीअमोघपाशमण्डल र बोधिसत्त्वहरु प्रतिस्थापन कार्य पूर्ण भएपछि मूलपुरोहितले जजमानको साथमा सूयार्ध (सुकुण्डा पूजा), गुरुमण्डल, समाधि बस्ने, कलशपूजा, मण्डलपूजा क्रमै सित जल,

अन्न, फूल, दक्षिणा, फलफूल आदि अर्पण गरी पूजा गर्दछन् । पूजा गर्दा पंचोपचार (पुष्प, धूप, दीप, नैबैद्य र रस) र पञ्चामृत (दूध, दही, घ्यू, मह र सखर) द्वारा पनि गरिन्छ । यसरी मूलपुरोहितबाट अष्टमीव्रतको प्रारम्भिक पूजा सकेपछि व्रतालुहरुलाई अष्टमीव्रत धारण गराउने कार्यक्रम आरम्भ हुन्छ ।

अष्टमीव्रत धारण गर्न सबै व्रतालुहरु क्रमवद्ध रुपमा बसेको हुन्छ । सबभन्दा पहिले प्रत्येक व्रतालुहरुको ठिक अगाडि गुरुमण्डल बनाई त्यस्को पूजा उपाध्यायको निर्देशन अनुसार गराइन्छ । व्रतालु सबैले व्रतधारण गर्न आवश्यक पर्ने पूजा सामग्रीहरु-जल, अन्न, गाईको दूध, धूप, दीप, फूल, फलफूल, द्रव्य, मिठाई टिका आदि आफ्नो आफ्नो अगाडि राखेको हुन्छ । सबै व्रतालुहरुलाई उपाध्यायद्वारा निम्न विभिन्न चरण अनुसारअष्टमीव्रत धारण गराइन्छ ।

**(ग) गुरुमण्डलाचर्नम् :**

कुनै पनि पूजा वा व्रत धारण गर्दा सबभन्दा पहिले गुरुमण्डल पूजा गर्नु अति आवश्यक मानिन्छ । अगाडी सबैलाई पञ्चगत्य (दूध, दही, घ्यू, गोमुत्र र गोमय) दिई शुद्ध पारिन्छ । गुरु वज्रसत्त्वलाई 'ॐ ह्रीं: स्वाहा' भनी जल हातमा लिई मुखमा छर्की 'नसला' लिने 'ॐ काय विशोधने स्वाहा' भनी जलद्वारा आफ्नो शरीरलाई पवित्र पार्ने, आदि विधिहरु गरिन्छ । 'ॐ सर्व विध्नानुत्सारे हूँ भनी मन्त्रानुच्चारण गरी सबै विध्न शान्त गराएपछि पूजाथाली संकल्प गरी श्री वज्रसत्त्वको साथै गुरुवुद्ध, गुरुधर्म र गुरुसंघलाई प्रमाण गरी टीका, चन्दन, फूल, अन्न, धूप, दीप, मण्डलमा चढाइन्छ । साथै पञ्चामृत र पंचोपचारद्वारा पूजा गरिन्छ । यसरी पूजा गरिएको मण्डल (मेरुमण्डल समान) लाई बुद्ध, धर्म, संघ र गुरुवज्रसत्त्वलाई अर्पण गरिन्छ । गुरुमण्डलको पूजा सकेपछि व्रतालु सबैले शिष्यगणको रुपमा पुरुपभए दाहिने गोडा भुईमा टेकी देब्रे गोडा उठाई, महिला भए देब्रे गोडा भुईमा टेकी दाहिने गोडा उठाई मूलपुरोहितलाई गुरु मानी धर्मदेशना र व्रतको



चित्र नं. १०
सामुहिक रुपमा अष्टमीव्रत धारण उत्सवमा
मूलपुरोहितको साथमा जजमान



चित्र नं. ११
अमोघपाश मण्डलको विचभागमा स्थापित अष्टमीव्रतका प्रमुख देवता
श्रीअमोघपाश लोकेश्वरको चाँदीको प्रतिमा

लागि प्रार्थना गरिन्छ । बुद्ध, धर्म र संघको साथै मूलमण्डलका स्वामी श्री अमोघपाश लोकेश्वरको शरणमा गई व्रतधारण गर्ने, नियम, विधि-विधान, देवताको स्वरुप, वर्ण र ध्यान बारे पनि बताईदिन हुन व्रतालुहरुले गुरुलाई प्रार्थना गरिन्छ । गुरुबाट व्रतालु सबैलाई आर्याष्टाङ्ग उपोषथ व्रत धारण गर्न दशाकुशल पाप छोड्ने आज्ञा हुन्छ ।

**(घ) दशाकुशल पाप देशना:**

**कायिककं त्रिविधं पापं वाचिकंतु चतुर्विधं ।**
**मानसं त्रिप्रकारेण तत्सर्व देशचाम्यहंम् ।**
**प्राणतिपात अदत्ता दान, काम मिथ्याचार**
**मृषावाद, पैशुन्य, पारुष्य, संभिन्न,**
**अभिध्या व्यापाद मिथ्या दृष्टि ।**

**अर्थ** : शरीरले गर्ने तीन पाप, वचनले गर्ने चारपाप र मनले गर्ने तीन पाप नै दशाकुशल पाप हुन यी सबै मैले पापदेशना गरेको भयो वा जाहेर गरेको भयो ।

**शरीरद्वारा गरिने तीन पापहरु निम्नानुसार हुन् ।**

१. प्राणाति पाप (प्राणीहिंसा गर्नु)
२. अदत्ता दान (चोरी गर्नु)
३. कामेसु मिथ्याचार (परस्त्री वा पुरुप गमन गर्नु वा व्यभिचार गर्नु)
यो शरीरद्वारा गरिने तीन पाप छोड्नु पर्ने हुन्छ ।

**वचनद्वारा गरिने चारपापहरु निम्नानुसार हुन् :**

१. मृपावाद (झूठो बोल्नु)
२. पैशुन्य (चुगलीखोर गर्नु)
३. पारुप्य (अरुलाई नचाहिंदो गाली गर्नु, कठोर बचन बोल्नु)
४. संभिन्न प्रलाप (व्यर्थको कुरा गर्नु)
वचनद्वारा गरिने चार पापहरु छोड्नु पर्ने हुन्छ ।

**मनद्वारा गरिने तीनपापहरु निम्नानुसार हुन् :**

१. अविध्या (लोभ गर्नु)

२. व्यापाद (अरुहरुको राम्रो भएको हेर्न नसकी विग्रार्न खोज्नु)

३. मिथ्यादृष्टि (पाप धर्मका फल छैन भने विचार गर्नु)

यसरी मनद्वारा गरिने तीन पापहरु छोडनु पर्ने हुन्छ ।

यस प्रकारले शरीर, वचन र मनद्वारा गरिने दशपापहरु सबै मैले पापदेशना गरेको भयो, जाहेर गरेको भयो र भनेको भयो र व्रत बस्ता यी दशपापहरु छोड्न प्रतिज्ञा गर्नु पर्ने हुन्छ । पापदेशना पछि लोकपालदेवताहरु इन्द्र, यम, वरुण, कुवेर, अग्नि, नैर्ऋत, वाय र ईशानको साथै सूर्य, चन्द्र, नक्षत्र, पृथ्वी, यक्ष, असुर, नाग, अध्र्वव्रम्ह आदिलाई जल, अन्न, फूलद्वारा पूजा गरिन्छ । पूरोहितले गुरुमण्डलको पूजाको अन्तिम चरणमा वज्रसत्त्वको शताक्षर मन्त्रोचारण गरी विसर्जन गरिन्छ ।[१]

त्यसपछि सबै व्रतालुहरुको अगाडी एउटा चारपाटे रातो कपडा राखन लगाई श्री अमोघपाशलोकेश्वरको प्रतिमा वीचमा र त्यस्को माथि श्री बुद्ध, धर्म र संघको प्रतिकात्मक चित्रहरु वज्र, ग्रन्थ र कमलको फूल अंकित भएको काठको छापामा सेतो चून राखी निम्न रेखात्मक चित्र नं. २ अनुसार छाप्न लगाइन्छन् ।

*रेखात्मक चित्र नं. २ (**व्रतालुले धारण र पूजा गर्ने व्रतस्थल स्वरुप**)*



१. श्रीबुद्धमण्डल (वज्र)
२. श्रीधर्ममण्डल (ग्रन्थ)
३. श्रीसंघमण्डल (कमलको फूल)
४. श्रीअमोघपाशलोकेश्वर मण्डल रुवरुप (प्रतिमा)

**(ङ) श्रीबुद्धमण्डल पूजा :**

*रेखात्मक चित्र नं. ३*

**श्रीबुद्धमण्डल**




| | | | |
|---|---|---|---|
| १. | वैरोचन | ६. | मामकि |
| २. | अक्षोभ्य | ७. | लोचनी |
| ३. | रत्नसंभव | ८. | पाण्डूरा |
| ४. | अमिताभ | ९. | आर्यतारा |
| ५. | अमोघसिद्धि | | |

अष्टमीव्रत धारण गर्न श्री बुद्धमण्डलको पूजा र उपासना महत्त्वपूर्ण मानिन्छ। उपर्युक्त रेखात्मक चित्र नं. ३ मा उल्लेख भए अनुसार बीचको वज्रको रुपमा अङ्कित रहेको श्रीबुद्धमण्डल पञ्चध्यानी बुद्ध वैरोचन, अक्षोभ्य, रत्नसंभव, अमिताभ र अमोघसिद्धि साथै वैरोचनकी शक्ति वाहेक मामकी, लोचनी पाण्डूरा र आर्यताराले युक्त भएको स्मरण गरी पूजा हुन्छ।

सबभन्दा पहिले उपाध्याय पुरोहितले उपस्थित सबै व्रतालुहरुलाई बुद्धमण्डलमा उनले भने अनुसार पूजा गर्न निर्देशन दिइन्छ । मण्डलको अगाडि एउटा दीप बाल्न लगाई मण्डलमा फूल अर्पण गरिन्छ। पुरोहितले मन्त्रउच्चारण गरी पंचबुद्ध र देवीहरुलाई मण्डलमा अधिस्थानका साथ आव्हान गरिन्छ। मण्डलमा जल चढाई पहेंलो टीका लगाइन्छन्। मण्डलमा विभिन्न पूजा सामाग्रीहरु अन्न, फूल, मिठाई, द्रव्य, धूप, दीप, लाजा चढाउनुको साथै पञ्चोपचार पूजा गरिन्छन्। बुद्धमण्डलमा सबै व्रतालुहरुलाई शंखमा पञ्चामृत (दूध, दही, घ्यू, मह र सखर) को साथै गाईको दूध, लाजा, द्रव्य, आरव्य(टुक्रा नभएको चामल), पंचरत्न, कुण्डपुष्प राखी 'अर्घ' अर्पण गराउने बेलामा पुरोहितले 'श्री मत् श्री बुद्ध संगण भट्टारकाय पाद्यं आचमनं प्रतिप्ट स्वाहा' भनी वाक्य उच्चारण गरिन्छ । यसै क्रममा पुरोहितले विभिन्न मन्त्रोचारण गरी हातका मुद्राहरुद्वारा देवीदेवतालाई पूजा र अर्चना गरिन्छ। सबै व्रतालुहरुले अन्न (चामल) हातमा राखी प्रमाण गर इन्छन्। पुरोहितले "ये धर्मा हेतु प्रभवा हेतु तेषा तथागताः। ह्यवदन्तेपाञ्च तेपां च योनिरोध एवं वादी महाश्रवणः ॥" वाक्य उच्चारण गरी भगवान्को पूजा गरिन्छ। पूजाको क्रममा सर्वप्राणीका दुःख हरणका लागि प्रार्थना गरी बुद्धमण्डलमा भातको 'बली' चढाइन्छ। यसरी पूजा गरि एको मण्डल बुद्धभगवान्लाई अर्पण गरी आफूलाई समेत बुद्धको शरणमा समर्पित गरिन्छन् । अन्तमा पुरोहितले सबै व्रतालुहरुलाई बुद्धमण्डलको व्याख्या, पञ्चबुद्ध सम्बन्धी पञ्चज्ञान, दर्शन र महत्त्वबारे धर्म देशना गर ाई अन्तत्तर संम्यक सम्बोधी ज्ञानका लागि प्रार्थना गराइन्छ। अन्तमा सबै व्रतालुहरु गुरुको आज्ञानुसार बोधीज्ञान प्राप्त नहुन्जेलसम्म महाकरुणा स्वरुप तीनकालका ज्ञाता, सबै वैरभावलाई शान्त गरी धर्मकाय भई सकल लक्षणले पूर्ण भएका शास्ता बुद्धको मण्डलमा शरण जाने प्रतिज्ञा गरी बुद्धमण्डलको पूजा विसर्जन गरिन्छ ।[२]

**(च) श्रीधर्ममण्डल पूजा :**

**रेखात्मक चित्र नं. ४**

श्रीधर्ममण्डल




१. प्रज्ञापारमिता
२. गण्डव्यूह
३. दशभूमि
४. समाधिराज
५. लंकावतार
६. सद्धर्मपुण्डरिक
७. तथागत गुह्यक
८. ललितविस्तर
९. सुवर्णप्रभास

श्री बुद्धमण्डलको पूजा जस्तै अष्टमीव्रत धारण गर्न श्री धर्ममण्डलको पूजा र उपासना पनि महत्त्वपूर्ण मानिन्छ। धर्ममण्डल उपर्युक्त रेखात्मक चित्र नं. ४ मा चित्रण भए अनुसार बुद्धमण्डलका दाहिने पट्टि श्रीधर्ममण्डल स्वरुप एउटा ग्रन्थ अङ्कित गरेको छ। यस धर्ममण्डल बौद्धधर्मका अति महत्त्वपूर्ण नवग्रन्थ-प्रज्ञापारमिता, गण्डव्यूह, दशभूमि, समाधिराज, लंकावतार, सद्धर्मपुण्डरिक, तथागत गुह्यक, ललितविस्तर र सुवर्णप्रभासका प्रतीक स्वरुप स्मरण गरिन्छ। बुद्धमण्डलमा जस्तै धर्ममण्डलमा पनि पुरोहितको निर्देशन अनुसार सबै व्रतालुहरूले पूजा, उपासना र अर्चना गरिन्छन्। सबै व्रतालुहरुले धर्ममण्डलमा जल, फूल, धूप, दीप, पहेंलो टीका, अन्न, द्रव्य, मिठाई, फलफूल, लाजा आदि पूजा सामाग्रीहरुद्वारा पूजा गरी व्रतविधि अनुसार अधिष्ठान, संकल्प, आव्हान, अर्ध, वन्दना, पञ्चोपचार पूजा, मण्डल अर्पण र वली दिइन्छन्। पूजाको क्रममा पुरोहितले 'ओँ श्री धर्ममण्डले

भट्टारकाय पाद्याचमनार्थ प्रतिच्छ स्वाहा', 'ॐ धर्ममण्डले सर्व विघ्नानुत्सार ये हुँ', 'ॐ प्रज्ञापारमितायै वज्रपुष्पं प्रतीच्छ स्वाहा', वाक्य उच्चारण गरे जस्तै एक एक ग्रन्थको नाम लिई स्तुति र पूजा गर्दछन् ।[४] पूजा सकेपछि मण्डल अर्पणका साथ वली स्तुति गरी भातको वली दिइन्छ । त्यसपछि गुरुपुरोहितले शिष्यगणहरूलाई धर्ममण्डलको व्याख्या गरी राग, द्वेष, माया, मोह र लोभलाई हटाउन प्रज्ञारुपी ज्योति जलाई धर्ममण्डल शरणमा जाने उपदेश दिइन्छ ।[३]

**(छ) श्री संघमण्डल पूजा :**

**रेखात्मक चित्र नं. ५**

श्री संघमण्डल




१. आर्यावलोकितेश्वर
२. मैत्रेय
३. गगनगञ्ज
४. समन्तभद्र
५. वज्रपाणी
६. मञ्जुघोष
७. सर्वनिवरणविष्कम्भि
८. क्षितिगर्भ
९. खगर्भ

अन्य मण्डलहरु जस्तै अष्टमीव्रत धारण गर्ने श्री संघमण्डलको पूजा र उपासना पनि महत्त्वपूर्ण मानिन्छ। कमलको फूल प्रतीक स्वरुप संघमण्डल उपर्युक्त रेखात्मक चित्र नं. ५ मा चित्रण भए अनुसार बुद्धमण्डलको देब्रे पट्टि अवस्थित रहन्छ। श्री संघमण्डलमा आर्यावलोकितेश्वर, मैत्रेय, गगनगञ्ज, समन्तभद्र, वज्रपाणी, मञ्जुघोष, सर्वनिव-रणविष्कम्भि, क्षितिगर्भ, खगर्भ नवबोधिसत्त्वहरु स्थापित भएको स्मरण गरिन्छ । अन्यमण्डलमा जस्तै

संघमण्डलमा पनि सबै व्रतालुहरुले पुरोहितको निर्देशन अनुसार जल छर्क दीप बाली संघमण्डलको पूजा आरम्भ गरिन्छन् । सबै व्रतालुहरुले संघमण्डलमा प्रत्येक बोधिसत्त्वको एक एक गरी नामोच्चारण गरी एउटा एउटा फूल चढाइन्छन् । साथै अन्न, पहेंलो टीका, द्रव्य, लाजा, फलफूल आदि पूजा सामाग्रीहरुद्वारा पूजा गरी व्रतविधि अनुसार अधिस्थान, संकल्प, आव्हान, अर्ध, वन्दना पञ्चोपचार पूजा, मण्डल अर्पण र वली दिइन्छन् । पूजा सके पुरोहितले शिष्यगणहरुलाई बौद्धधर्ममा संघरत्नको गुण, महत्त्व र प्रतिस्था बारे व्याख्या गरिन्छ । संघका बोधिसत्त्वहरु अर्हतहरु हुन जो सर्वसत्त्वप्राणीलाई उद्धार गर्ने हेतुले सधैं दत्तचित्त भईरहेको हुन्छन् । यी बोधिसत्त्वहरुवाटै हामीले धर्मका कुरा र धर्मका मार्गहरु थाहा पाउन सकिन्छ । त्यसैले उहाँहरुको करुणा, गुण र संघको महत्त्वलाई बुझी वन्दना गरी संघमण्डलको पूजा र शरणमा जाने पुरोहितबाट धर्मदेशना हुन्छ । तीन मण्डलको पूजा, उपासना सके पछि एक सय पटक सम्म वज्रसत्त्व सबै व्रतालुहरुलाई वाचन गर्ने निर्देशन दिइन्छ ।

**(ज) श्रीअमोघपाशमण्डल पूजा**

रेखात्मक चित्र नं. ६ **श्रीअमोघपाशमण्डल**



१. अमोघपाश लोकेश्वराया ऱ्हीं (शिरमा)
२. ओं त्रैलोक्य विजय (मनमा)
३. ओं मणि पद्मे हुँ (पेटमा)
४. अमोघांकुश
५. तारा
६. अमिताभ
७. भृकुटी
८. सुधनकुमार
९. आर्यावलोकितेश्वर
१०. खषर्पण
११. हयग्रिभ
१२. अजित
१३. अपराजित
१४. मारसैन्यप्रमदर्णाय
१५. वरदा
१६. अकालमृत्यु
१७. जय
१८. विजय
१९. जयविजय
२०. वरदा
२१. वसुन्धरा
२२. अभयप्रदा
२३. धनप्रदा
२४. प्रत्येकबुद्ध
२५. सुवर्णप्रभादित्य
२६. सिंहविक्रिंदीत
२७. सुप्रतिस्ठित मणिकुट
२८. समन्तरश्मि
२९. विपश्वि
३०. शिखि
३१. विश्वभू
३२. ककुच्छन्द
३३. कनकमुनि
३४. सुप्रकीर्ति
३५. समंतावभासनिर्जितसंग्राम
३६. इन्द्रकेतु
३७. रत्नप्रभासेश्वर
३८. भैषज्यराज
३९. विक्रांतकामन
अ. पुष्पतारा
आ. धूपतारा
इ. दिपतारा
ई. गन्धतारा
४०. इन्द्र
४१. यम
४२. वरुण
४३. कुवेर
४४. अग्नि
४५. नैर्ऋत्य
४६. वायूव्य
४७. ईशान
४८. ब्रम्हण
४९. चन्द्र
५०. सूर्य
५१. पृथ्वी
५२. त्योमचित्राय
५३. नाग

श्रीअमोघपाश लोकेश्वरको प्रतिमा अङ्कित सहितको श्रीअमोघपाशमण्डल स्वरुप नै यस व्रतको प्रमुख देवता र मण्डल हो जस्को पूजा र उपासना विस्तृत रुपमा हुन्छन् । हुनत उपर्युक्त रेखात्मक चित्र नं. ६ मा चित्रण गरेका देवीदेवताहरु मूलपुरोहितले अमोघपाशलोकेश्वरको मण्डल स्थापना गर्दा नै अधिस्थान, संकल्प, अर्ध, आव्हान गरी विभिन्न पूजा सामग्रीद्वारा पूजा र उपासना गरी सकेको हुन्छ तापनि हरेक व्रतालुहरुको अगाडि रातो कपडामा छापद्वारा चित्रण गरेको अमोघपाश लोकेश्वरको प्रतिमा माथि पनि अमोघपाश लोकेश्वरको मण्डल स्वरुप पुरोहितको निर्देशन अनुसार व्रतालुहरुले पूजा र उपासन गर्दछन् ।

सबै व्रतालुहरुले रेखात्मक चित्र नं. ६ बमोजिम सबै देवीदेवताहरु अमोघपाशलोकेश्वरको मण्डलमा प्रतिस्थापित भएको स्मरण गरी फूल चढाई पहेंलो टीका लगाइन्छ । सबै व्रतालुहरुलाई त्रिरत्न शरण गमन अर्थात् बुद्ध, धर्म र संघको शरणम् भनी तीन पटक भन्न लगाइन्छ । अमोघपाश लोकेश्वरलाई सबैले अन्न, फूल, फलफूल, द्रव्य, धूप, दीप, मिठाई कुण्डफूल (द्वाफोस्वाँ) अर्पण गरी पूजा, उपासना र अर्चना गरिन्छन् । पुरोहितले अमोघपाश लोकेश्वरको स्तुति निम्नानुसार गरिन्छ :-

**ओँ नमो अमोघपाश लोकेश्वराय ।**
**न्हीं कारसंभवनाथं करुणास्निग्ध मानसं ॥**
**मैत्री, करुणा मुदितोपेक्षां भावतय् ॥**
**ओँ समन्वाहरतुमां बुद्धाशेषादिक्षुस स्थिता ।**

यस्को साथै सबै व्रतालुहरुलाई षद्गतिका सर्वसत्त्व प्राणीहरुको उद्धारका लागि चतुर्ब्रम्ह विहार अर्थात् मैत्री (उदारता) करुणा (दया, अनुग्रह) मुदिता (अरुको सुखमा खुसी हुनु) र उपेक्षा (तथस्त भाव राख्नु) को भावना (ध्यान) गराइन्छन् । यसरी चतुर्ब्रहम विहारको ध्यान भावना पाली विधि अनुसारको धेरै पुरानो परम्परा मानिन्छ । यस्को साथै कुण्डपुष्प (द्वाफोस्वाँ) मण्डलमा चढाई पुरोहितले निम्न वाक्य उच्चारण गरिन्छ ।

**न्हींकारं सं भवनाथं करुणास्निग्ध मानसं ।**

**अमोघपाश नामानं लोकनाथं नमाम्यहम् ॥**

स्वभाव शुद्धाः सर्वधर्मा स्वभावं शुद्धोहं शुन्यता ज्ञानबज्र स्वभावात्मकोऽहम् । शुन्यतां विभाव्य हृदिस्थ पंकारण । विश्वदलपद्म कर्णिकोपरि चन्द्र मण्डलं तस्योपरि न्हींकारं तत्परिनामेन श्री अमोघपाश लोकेश्वरं भावयत् ॥[४]

त्यसपछि अमोघपाशलोकेश्वरको वर्ण, स्वरुप, आयुध बारे पुरोहितले सबै व्रतालुहरुलाई देशना गरी अमोघपाश लोकेश्वरको ध्यान गर्न लगाइन्छन् । ध्यानाभावना सकेपछि व्रतालु सबैलाई अमोघपाशमण्डल पूजा गरी पिण्डपात्र अर्पण र पान, सुपारी चढाइन्छन् । त्यसपछि सबैले अमोघपाश मण्डलमा निम्नानुसार स्तुति गरी अष्टांग प्रमाण (दण्डवत) गरिन्छ :-

**नमो रत्नत्रयाय नमो मञ्जुश्रीय ।**

**नमो सूश्रीय नमो उत्तम श्रीये स्वाहा ॥**[५]

व्रतालु सबैले कुण्डपुष्प (द्वाफोस्वाँ) लाजा (ताय्) र आरख्य आफ्नो टाउकोमा छुन लगाई मण्डलमा अर्पण गरी अमोघपाश लोकेश्वरको एक्काइस पटक निम्न धारणी पाठ गरिन्छ ।

ॐ नमः रत्नत्रयाय ॥ ॐ नमः श्री मदार्यावलोकितेश्वराय बोधिसत्त्वय, महासत्त्वाय महाकारुणीकाय ॥ तद्यथा ॥ ॐ अमोघशील महाशील शुद्धसत्त्व भर भर संभर संभर पद्मविभूषित भुज धर समन्तावलोकितेश्वराय ॐ आः हुँ फट् स्वाहा ॥ यस्को साथै वज्रसत्त्वको शताक्षर वाक्य पाठ गरिन्छ । त्यसपछि यस अष्टमीव्रतको महत्त्वपूर्ण व्रतसुत्रको पूजा हुन्छ । व्रतसूत्रलाई पहिले नै मूलपुरोहितको अगाडिको मण्डलको कलशमा प्रतिस्थापन गरेको हुन्छ ।पछि यस व्रतसूत्रलाई लम्ब्याएर प्रत्येक व्रतालुहरुको हात हात राखेर

धागाको छेउ भाग पुन: अमोघपाश मण्डलमा नै जोडेको हुन्छ। यस व्रत सूत्रलाई पूजा गर्दा पुरोहितले निम्नानुसार वाक्य उच्चारण गरिन्छ :-

**ओँ नमो भगवत्ये अमोघपाश लोकेश्वराय धर्मसुत्र**
**प्रयच्छामि वज्रधर्म न्हीँ"**

व्रतसूत्रमा एक्काइस ओटा कुण्डपुष्प (द्वाफोस्वाँ) चढाइन्छ। त्यसपछि यस व्रतसूत्रमा पञ्चोपचार पूजा गरिन्छ। पूजाको कार्यक्रम सकेपछि पुरोहितले सबै व्रतालुहरुलाई दशाकुशलपाप गर्नाले के के प्रतिफल पाउने कुरा पनि बताइन्छ। प्राणी हिंसा गरेको पापले जन्मजन्मान्तर अर्काको हातबाट मर्नु पर्ने हुन्छ। चोरी गरेको पापले दरिद्र भई जन्म लिनु पर्ने हुन्छ। व्यभिचार गरेको पापले आफ्नो मन पर्ने व्यक्तिबाट टाढा रहनु पर्ने हुन्छ। झूठो बोलेको पापले लाटालाटी हुनु पर्ने हुन्छ। चोरी गरेको पापले आफ्नो साथमा बसेको संग टाढा हुनु पर्ने हुन्छ। अरुहरुलाई चाहिंदो नचाहिंदो गाली गरेको पाप वचनले अनर्थ भोग्नु पर्ने हुन्छ। संगै बसेकालाई फाटेको पापले झगडा मात्रै गर्ने कूलमा जन्मनु पर्ने हुन्छ। अरुहरुको वस्तु लोभ गरेको पापले सबैले हेला गरी बस्नु पर्ने हुन्छ। इर्श्याको भावले अरुलाई विगारेको खण्डमा नीचकूलमा जन्म लिनु पर्ने हुन्छ। कुबुद्धि भई पाप धर्मको फल छैन भनेर धर्ममा अविश्वास गरेको पापले मूर्ख भएर बस्नु पर्ने हुन्छ।[६]

अष्टमीव्रत धारण गर्दा पालन गर्नु पर्ने नियम-

**मद्यमांस महापानं भक्षणंच विवर्जयेत्।**
**उपोषधेकपिं सद्धर्मे समाप्तं प्रतिपालयेत्।**

उपोपथ व्रत बसेको दिनमा मदिरा, मासु खाने पिउने अधम क्रिया निपेध गरी व्रत पालन गर्न सकेमा बुद्धि सिद्धि प्राप्त हुन्छ।[७] साथै उक्त दिनमा नुन, जाँड रक्सी, अकालमा भोजन नगरी, गीत, संगीतबाट टाढा रही, विलासी ओछ्यानमा नसुति, हिंसा, चोरी नगरी, ब्रह्मचर्यपालन गरी अष्टशील पालन गर्नु पर्ने निर्देशन पनि दिन्छन्। यसरी अष्टशील पालन

गरी दातावंत, क्षमावंत, करुणावंत भई एकचित गरेर श्री अमोघपाश लोकेश्वरको अष्टाङ्ग-उपोपथ व्रत पालन गरेको पुण्यले अनुत्तर सम्यकसंबोधिज्ञान प्राप्त हुन्छ भने धर्मदेशना दिइन्छ ।

यसरी गुरुबाट श्री अमोघपाश लोकेश्वरको वर्ण, स्वरुप, पूजा उपासना, प्रज्ञापारमिताज्ञान, बोधिसत्वको करुणा, दशाकुशल पाप फल आदिवारे व्याख्या गर्ने कार्य पूर्ण भएपछि संपूर्ण मण्डल अर्पण कार्य र भातको वलि चढाइन्छन् । साथसाथै पुरोहितबाट निम्न वाक्य वाचन हुन्छ ।

**ओं अमोघपाशाय त्रैलोक्य दर्पणाय महाकारुणिचिताय**
**सकल रोग दरिद्र दु:ख सह दुस्त मुपनाय**
**इदंबलि दुग्धादि सहिताय गृहितोय भुजंतु**
**शान्ति पुष्टिं रक्षा कुरु ओं आः हुँ फट स्वाहा ॥**[८]

उपोपथव्रत धारण गर्दा रोगीहरुको रोग निर्मुल हुन्छ, निर्धन धनवान हुन्छ, निसन्तानले सन्तान पाउँछन् भने ठूलो विश्वास गरिन्छ । त्यसपछि पुरोहितले वज्रसत्त्वको शताक्षर वाक्य पाठ गरिन्छ । व्रतालुहरुको हातमा भएको व्रतसुत्र पुन: ठूलो मण्डलमा राखिन्छ । रत्नमण्डल अर्पण गरी दण्डवत र प्रणाम गरिन्छ । त्यसपछि वेताजु पुरोहितले सबै व्रतालुहरुलाई बुद्ध जातक सम्वन्धी कथा वाचन गरिन्छ । यस इवहीथूरको अष्टमीव्रत धारण उत्सवमा वेताजूले भगवान् बुद्धको पहिलेको जन्मको (जातक कथा) महासत्त्व राजकुमारको कथा (सम्वन्धित नभएतापनि) वाचन गर्नु भएको थियो। कथावाचन पछि सबै व्रतालुहरुलाई 'सिफं लुये' भनेर अन्न फलफूलका सानो सानो टुक्रा पारी घण्टामा राखी व्रतालुहरुको टाउकोमा राख्ने कार्य हुन्छ । सबै व्रतालुहरुलाई ज्ञानका प्रतीक वज्र छुन लगाइन्छन् । किनकि अज्ञानताबाट प्रकाशतर्फ लैजानु यस व्रत-विधिको मुख्य उद्देश्य हो । यसै वीचमा जजमानले चक्रपूजा अर्थात् थूरको वरिपरि भएका देवीदेवताहरुलाई पूजा गरिन्छ । व्रतका सबै पूजा कार्य सकेपछि सबै जनाले मूलपुरोहितले वाक्य उच्चारण गर्दै गरेको बेलामा सबै व्रतालुहरुले ठूलो मण्डलमा एक

पछि अर्को गर्दै अक्षताले पुजिन्छ जस्लाई 'किग्व तिने' भनिन्छ । अन्तमा क्षमार्पण पूजा गरी सबै व्रतालुहरुलाई टीका र व्रतसूत्र धारण गर्न लगाई सबै जना आफ्नो आफ्नो व्रत स्थान उठी मूलपुरोहितको अगाडीको श्रीअमोघपाशलोकेश्वरको मण्डलमा अर्ध अर्पित गर्दछन् । सबै व्रतालुहरुको पूजा सके पछि आफ्नो आफनो मण्डल, नदीमा गएर समर्पण वा बगाउन पठाइन्छ । यसरी अप्टमीव्रत धारण गर्ने कार्य करिव पाँच वजेतिर विसर्जन हुन्छ । त्यसपछि मात्र सबै व्रतालुहरुले निरामिष भोजन गरिन्छ ।

**(झ) अष्टमीव्रत धारणका मुख्य मुख्य विशेषताहरु :**

- अप्टमीव्रत महायान परम्परानुसार शुक्लाष्टमीको दिनमा श्रीआर्यअमोघपाश लोकेश्वर, आर्य अवलोकितेश्वर, अष्टबोधिसत्व र पञ्चबुद्ध सहित शक्तिहरुको स्मरणमा व्रत धारण गर्नु,
- देश, समाज र व्यक्तिलाई बौद्धधर्म, बौद्धदर्शन र पद्धतिबारे जानकारी दिनु,
- बौद्धधर्म गृहत्यागीहरुका लागि मात्र नभई गृहस्थवर्गलाई पनि गृहस्थ धर्म पालन गर्नुको साथै व्रतधारणबाट पनि पुण्य प्राप्त हुन्छ भन्ने पुष्टि गर्न,
- भगवान् बुद्धले प्रतिपादन गर्नु भएको पञ्चशील, अप्टशीलको पालनाले आधुनिक समाजका विकृतिलाई हटाई विश्वशान्ति स्थापना गर्न,
- अप्टमीव्रत पालनाले व्यक्तिका चित्तशुद्धि, व्यक्तित्वको विकासका साथै परहितको लागि पनि मैत्री र करुणाको भावना जागृत गराउन र
- विभिन्न वाहा, तीर्थ स्थलहरुमा गएर सामुहिक रुपमा व्रत धारण गर्ने हुँदा बौद्धधर्मको प्रचार हुनुको साथै समाजको कल्याणका लागि धर्म र संघको संरक्षण गर्दै बौद्धधर्मको प्रचारमा व्यापकता ल्याउनलाई अप्टमीव्रत धारणले विशेप सहायता पुऱ्याउने देखिन्छ ।

## पाद टिप्पणी

१. शताक्षर मन्त्रोचारण :

ओँ वज्रसत्त्व समये मनुपालय वज्रसत्त्व त्वेनो पतिष्ठ दृढोमेभव : सुतोष्यो मेभव सुपाष्यो मेभव अनुरक्तोमेभव अनुरक्तो मेभव सर्वसिद्धिमे प्रयच्छ सर्व सुचमे चित्तं श्रेयं कुरु हुँ ह ह ह ह हो भगवत् सर्व तथागत् कर्म वज्रमामे मुञ्च वज्रीभव महासमय सत्त्व आ: ।

२. वदीरत्न वज्राचार्य (सम्पादक) न्याधा बौद्ध पूजा विधि, (यें, गोफले, इनाखा : अष्टमान महर्जन, ने.सं ११११३) पृष्ठ १–३

३. उही पृष्ठ ४–६

४. उही पृष्ठ १२

५. अमोघपाश लोकेश्वर करुणामय स्तोत्र, (भाष्करवर्णमहाविहार टोल सुधार समिति वज्राचार्य पूजाविधि अध्ययन समिति न:वही, न्याखाचूक, यलको संयुक्त आयोजना भएको उपोषथ व्रतको उपलक्ष्यमा पुण्यराज शाक्यले प्रकाशित गर्नु भएको स्तोत्र पुस्तिका) पृष्ठ ३

६. वद्रीरत्न वज्राचार्य (टिप्पणी नं. २) पृष्ठ २३

७. पं. वै आशाकाजी वज्राचार्य, नेपाल द्वादश तीर्थ व्रत, (यल, नागवाहा: बुद्धराज शाक्य ने. सं. ११०१) पृष्ठ इ.

८. वद्रीरत्न वज्राचार्य (टिप्पणी नं. २) पृष्ठ २४



### अध्याय-नौ

# अष्टमीव्रत कथा

अष्टमीव्रतका विभिन्न उल्लेखनीय पक्षहरुमा अष्टमीव्रत धारण गर्ने बेलामा पुरोहित आचार्यद्वारा सबै व्रतालुहरुलाई अष्टमीव्रत सम्वन्धी अवदान कथाहरु वाचन गर्ने पनि एउटा महत्त्वपूर्ण पक्ष मानिन्छ । ती अवदान कथाहरु भगवान् बुद्धको पहिलेको सहस्र (१000) जातक कथाको रुपमा थिए जस्मा भगवान् बुद्धले पहिलेको जन्ममा बोधिसत्त्वको रुपमा प्राणीहरुका लागि गरेको विभिन्न त्याग, तपस्या र वलिदानको चर्चा र व्याख्या गरिएका छन् । ती जातक कथाहरु मध्ये वर्तमान नेपालमा धेरै प्रचलित भएको जातक निम्नानुसार छन् -

**(क) नेपालमा प्रचलित जातक :**

**सत्ययुग**

१. रुपावत नृप जातक
२. सुप्रभास नृप जातक
३. पुण्यवल नृप जातक
४. धर्माकर नृप जातक
५. दुर्धननृप जातक
६. प्रदीप प्रद्योत नृप जातक
७. अम्वर नृप जातक
८. यक्ष राजा जातक
९. शिविराजा जातक
१०. मैत्रीवल कुमार जातक
११. कवि कुमार जातक

**त्रेतायुग**

१२. चन्द्रप्रभ नृप जातक
१३. धर्मपाल राजकुमार जातक
१४. मैत्री कंन्यक कुमार जातक
१७. सर्वानन्द नृप जातक
१८. सुप्रिय सार्थवाह जातक
१९. सुतशोम नृप जातक

१५. सर्वज्ञ मित्र पादाचार्य जातक
१६. सुधन कुमार जातक
२०. सर्वनन्द नृप जातक
२१. सुरुप नृप जातक

## द्वापरयुग

२२. सुवर्णवर्ण कुमार जातक
२३. श्री मट्वाहन नृप जातक
२४. जलवाहन राजकुमार जातक
२५. पद्म शेखर राजकुमार जातक
२६. वीरकूश नृप जातक
२७. महासत्त्व राजकुमार जातक
२८. सिंहल सार्थवाह जातक
२९. श्येननृप जातक
३०. विश्वन्तर राजकुमार जातक
३१. मणिचूड राजकुमार जातक

## कलियुग

३२. बोधिसत्त्व सर्वार्थसिद्ध राजकुमार जातक

यी जातकहरुको वाचन अप्टमीव्रत धारण गर्न जाँदा खेरी जुन स्थलमा अप्टमीव्रत बस्ने हो त्यो स्थल संग सम्वन्धित जातकहरु वाचन गर्ने प्रचलन पाइन्छ। उदाहरणको लागि नमो बुद्धमा अप्टमीव्रत बस्न जाँदा महासत्त्व र ाजकुमार जातक, मणिचूडमा अप्टमीव्रत बस्न जाँदा मणिचूड राजकुमार जातक वाचन गर्ने चलन छ। त्यस्तै अरु ठाउँहरुमा अप्टमीव्रत धारण गर्न जाँदा ठाउँ हेरी व्रतकथा, जातक वाचन गर्ने प्रचलन अद्यापी पाइन्छ।



अध्याय-दश

# द्वादश तीर्थव्रत कथा

बौद्धधर्म अन्तर्गत तीर्थयात्रा गर्नु अघि हरेक तीर्थयात्रीले चैत्यव्रत धारण गर्नु पर्ने परम्परा निकै प्राचीन रहेको छ । त्रेतायुगमा ककुछन्द बुद्धका शिष्य सर्वज्ञमित्राचार्य गुरु भएर रत्नकोसवती देशका राजा र त्नकेतुलाई सबभन्दा पहिले चैत्यव्रत गराएका थिए ।[1] द्वादश तीर्थहरु र अष्ट वैतराग उपतीर्थहरुमा गएर अष्टमीव्रत धारण गर्ने वेलामा पनि चैत्यव्रत धारण र पूजा उपासना निकै महत्त्वपूर्ण मानिन्छ ।

बौद्धमार्गी नेवार समाजमा सामूहिक रुपमा अष्टमीव्रत, द्वादश तीर्थस्थलहरुमा गएर पनि धारण गर्ने निकै प्रचलन पाइन्छ । विशेष गरी यी बाह्र तीर्थहरुमा देवीहरुको प्रसिद्ध पीठहरु हुनुको साथै एउटा एउटा तीर्थमा एक एक जना नागराजहरु निवास गरिएको मानिन्छ । यी नागराजहरुको निवासस्थान स्थापनाको काठमाडौं उपत्यकाको उत्पत्ति कथाहरुसित सम्वन्धित रहेको देखिन्छ । स्वयम्भू पुराण अनुसार काठमाडौं उपत्यका पहिले एउटा ठूलो नागहृदको रुपमा थियो जहाँ अनेक नागराजहरु निवास गर्दथे । यो नागहृदमा विपश्वि तथागतले कमलको फूल रोपेपछि हजारपत्ता भएको कमलको फूल उत्पत्ति भई त्यसमाथि ज्योतिस्वरुप स्वयम्भू प्रज्वलित हुन पुगे । त्यसको केही समयपछि बोधिसत्त्व मञ्जुश्रीले चोभारको डाँडोलाई आफ्नो खड्ले प्रहार गरी उपत्यकाको जललाई बाहिर पठाई दिए । जलसंगै धेरै नागहरु पनि बगेर उपत्यका बाहिरिए । तर कुलिक नामक नागराजले यही उपत्यका भित्र नै वास गर्ने इच्छा राखी ठूलो वर्षा गराई उपत्यकामा पुन: जलमग्न गराए । यसरी मानिसहरुले ठूलो विपत्तिको सामना गर्नु पर्दा यसको निवारणका लागि अवलोकितेश्वरलाई प्रार्थना गरे । मानिसहरुको विपत्ति हताउन अवलोकितेश्वरले बोधिसत्त्व समन्तभद्रलाई उपत्यकामा पठाए । समन्तभद्रले कुलिक नागराज लगायत अरु एघारजना

नागराजहरुलाई उपयुक्त स्थानहरुमा निवास गराईदिने वचन दिए पछि मात्र वर्षा थामियो। समन्तभद्रले ती नागराजहरुलाई यहाँका निवासीहरुलाई चाहिने जति वर्षा गराईदिने प्रतिज्ञा गर्न लगाई ती १२ जना नागराजहरुलाई दुई नदीको संगम स्थलहरुमा स्थायी निवासस्थान बनाईदिए जुन स्थानहरु पछि पवित्र तीर्थस्थलहरुको रुपमा प्रसिद्ध हुन गए।

**(क) द्वादश तीर्थ :**

नेपाल द्वादश तीर्थ महात्म्य अनुसार नेपालका बौद्धमार्गी नेवारहरुले अष्टमीव्रत धारण गर्न जाने द्वादश तीर्थस्थलहरु निम्नानुसार हुन् :-

१. पुण्यतीर्थ
२. शान्ततीर्थ
३. शंकरतीर्थ
४. राजतीर्थ
५. मनोरथतीर्थ
६. निर्मलतीर्थ
७. निधानतीथ
८. ज्ञानतीर्थ
९. चिन्तामणितीर्थ
१०. प्रमोदतीर्थ
११. सुलक्षणतीर्थ
१२. जयतीर्थ

यी द्वादश तीर्थस्थलहरुको प्रत्येक व्रतकथाहरु श्री शाक्यमुनि भगवान् बुद्धले मैत्रैय तथा अरु बोधिसत्त्वहरुका अनुरोधमा कृपा राखी आज्ञा गर्नु भएको भने नेपाल द्वादश तीर्थ महात्म्यमा उल्लेख भएको छ।[३] यी तीर्थहरुमा अष्टमीव्रत बस्दा यी तीर्थहरुमा रहेका प्रमुख देवता र मूतिहरु जस्तै चैत्य, नागराज, पीठ र दिक्पालको विशेप पूजा, पाठ र अर्चना हुन्छ। यी तीर्थस्थलहरुमा देवता र पीठको दर्शन र पूजा गरेपछि तीर्थयात्री वा उपासकले (व्रतालु) फलका रुपमा पुण्य प्राप्त गर्न सक्ने उल्लेख पाइन्छ।

## १. पुण्यतीर्थ (गोकर्ण)

**१.२. परिचय:**

अष्टमीव्रत धारण गर्न जाने महत्त्वपूर्ण तीर्थस्थलहरुमा पुण्यतीर्थ पनि एक हो जस्लाई शोधनतीर्थ पनि भनिन्छ। गोकर्णमा अवस्थित यो पुण्यतीर्थ

वागमती र अमोघफलदायिणी दुईनदीको संगम स्थल हो। यो तीर्थ नवफणाले संयुक्त रक्तवर्ण तक्षक नागराजको निवास स्थान र ब्रहमायणीदेवीको पीठको रुपमा पनि प्रसिद्ध छ। यो तीर्थस्थलमा विशेष गरी नवग्रन्थको **प्रज्ञापारमिता सूत्रः** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ। यो तीर्थमा लाग्ने मेला श्रावणकृष्णाको अमावास्या सोमवार सिंहसक्रान्तिको दिनदेखि २१ दिन सम्म नियमित स्नान गरेको खण्डमा दशाकुशल पाप नष्ट हुने कुरा उल्लेख गरिएको पाइन्छ।[३]

## १.२. पुण्यतीर्थसंग संवन्धित व्रत कथाः

नेपाल द्वादश तीर्थ महात्म्य अनुसार तक्षक नामक नागराज आफ्नो पहिलेको पापक्रियाले गर्दा कुष्ठरोगले ग्रष्ठित थिए। यस रोगबाट छुटकारा पाउनको लागि पुण्यतीर्थमा त्रिरत्न (बुद्ध, धर्म र संघ) को शरणमा गएर एक्काईस दिन सम्म स्नानगरी षडक्षरीमन्त्र (ॐ मणि पद्मे हुँ ह्रीः) उच्चारण गरी वालुवाको चैत्य बनाई उपोषथ व्रत बस्न थाले। यस्ले गर्दा उनको कुष्ठरोग शान्त भई दिव्यदेह प्राप्त भयो। उनी पुण्यतीर्थमा बास गरी नित्य स्नान, त्रिरत्नका शरण गई अष्टमीव्रत पालना गरी बसीरहे। एकदिन उनी बाहिर आएर घाम तापिराखेको बेलामा अकस्मात् एउटा गरुडको आँखा उनीमा पऱ्यो जस्को फलस्वरुप दुवैबीच ठूलो संघर्ष हुन थाल्यो। गरुडले नागराजलाई हराउन नसकेको देखेर आफ्नो मद्दतको लागि वैकुण्ठवासी नारायण देवतालाई पुकारेको हुनाले शंख, चक्र, गदा र पद्म धारण गरी नारायण त्यहाँ आइपुगे। आफ्नो वाहन गरुडलाई दुःख दिइरहेको देखेर नारायणले आउन वित्तिकै क्रोधवश नागराजलाई चक्रले हान्न तैयार भए। यो देखेर तक्षक नागराजले पनि त्रिरत्नको नाम लिई षडक्षरीमन्त्र धारण गरी आफ्नो रक्षाको लागि लोकेश्वरको स्मरण गर्न थाले। आफ्नो सेवक तक्षकनागराजको प्राण संकटमा परेको देखेर रक्षार्थको लागि लोकेश्वर सिंहको आसन गरी त्यहाँ प्रकट भयो। लोकेश्वरले गरुडलाई अरुलाई शत्रु र वैरभाव राख्दा आफ्नो ज्यूज्यान समेत संकटमा पर्ने हुनाले सबै प्राणी

उपर करुणा राख्दा सदा आफ्नो भलो हुने उपदेश दिँदै लोकेश्वरले तक्षकनागराजलाई समातेर गरुडको घाँटीमा राखी दुवैको शत्रु र वैर भावलाई मित्रतामा परिणत गरिदिए। यस्ले गर्दा नारायण अत्यन्त खुसीभई लोकेश्वरलाई पंचोपचार पूजा गरी चरणकमलमा प्रणाम गरे। त्यसपछि सबै जना मिली बस्ने आसयले सिंहमाथि गरुड, गरुडमाथि तक्षकनागराज तक्षकनागराजमाथि नारायण, नारायणमाथि लोकेश्वर करुणामय विराजमान भएर श्री ३ हरिहरिहरिवाहन लोकेश्वरको रुपमा आकासमार्ग हुँदै अत्यन्त शुद्ध भएको चारुगिरी पर्वतमा आएर बसे।[४] यसरी नेपाल अधिराज्यको र क्षार्थ अद्यापि चांगुमा स्थीर भएर विराजमान भएको श्री ३ हरिहरिहरिवाहन लोकेश्वर बौद्धमार्गी नेवार समाजको साथै हिन्दु समाजमा पनि अत्यन्त लोकप्रिय रहेको छ।

### १.३. पुण्यतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामग्री :

अष्टमीव्रत बस्दा चैत्य, नागराज, पीठ र गोकर्णेश्वर दिग्पाल पूजाको लागि आवश्यक विशेष पूजा सामग्रीहरु निम्नानुसार छन् - रजत कुण्डपुष्प (नेवारी-द्वाफोस्वाँ), रजत दृष्टि, चाँदी र तामाको धातु, धूप पद्मकेशर, छत्र, दक्षिणा-माणिकरत्न, मह, अनार, अमला।[५]

### १.४. पुण्यतीर्थ व्रतफल :

यस तीर्थमा स्नान, दान, पाठ पूजादि, व्रत बसेको पुण्य एकहजार यज्ञ होमार्चन गरेको तुल्य फल प्राप्त हुन्छ।[६]

## २. शान्ततीर्थ (गुह्येश्वरी)

### २.१. परिचय :

गुह्येश्वरीमा अवस्थित यो शान्ततीर्थ स्थल वागमती र मारदायिणी दुई नदीहरुको संगम तीर्थस्थल हो जुन गुह्येश्वरी मन्दिरको ठीक अगाडि पट्टी पर्दछ। यो तीर्थ सातफणाले संयुक्त भएको श्वेतवर्ण सोमशिखि नागराजको वासस्थानको साथै गुह्येश्वरी देवीको पीठको रुपमा पनि प्रसिद्ध छ। यहाँ

विशेष गरी नवग्रन्थको **गण्डव्यूह सूत्र** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ। यस तीर्थमा लाग्ने मेला भाद्र शुक्लप्रतिपदा बुधवार कन्यासंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा कुष्ठरोग शान्त भएर जाने विश्वास गरिन्छ।[७]

## २.२. शान्ततीर्थसंग सम्वन्धित व्रतकथा :

नेपाल द्वादश तीर्थ महात्म्य अनुसार हिमालय नाम गरेका राजाको छोरी पार्वतीदेवीको विवाह महादेवसंग हुन गई गणेश र कुमारको जन्म भयो। दुवै छोराहरु ठूला भएपछि उनीहरुको पराक्रम हेर्न महादेवले दुवै जनालाई सुमेध असुमेध घुम्न पठाए। छोराहरु पराक्रमका साथ घुमेर फर्की आएपछि महादेवले गणेशलाई जुनसुकै पूजा वा कार्य गर्दा गणेशलाई सर्वप्रथम पूजा गरेमा मात्रै कार्य सिद्ध हुने वरदान दिई मत्यलोक (मनुष्यलोक) मा पठाए भने कुमारलाई पूजा सामग्री बनाउने बेलामै ती सामग्रीहरुको केही भाग पूजा सुरु हुनु भन्दा अगाडि मूल ढोका (नेवारी: पिखालखूस:) चढाउनु पर्ने गराई कुमारलाई ढोकामा बस्न पठाए। त्यसपछि भने महादेव भाङ्ग, धतुर, गाँजा, सेवन गरी वस्त्रहीन भई श्मशानको भस्म लेपन गरी जथाभावी हिड्न लागेको देखेर उनका ससुरा हिमालय, पत्नी पार्वतीदेवीले धेरै संम्भाए बुझाए। यसरी धेरै पटक संभाएर पनि केही सीप नलागेकोले आखिरमा पार्वती महादेवलाई छोडी शान्ततीर्थमा आइपुगिन्। यो शान्त तीर्थस्थल श्री खगानना गुह्येश्वरीको वासस्थान भएकोले पनि पार्वती यहाँ बसी तपस्या गर्ने निश्चय गरी नित्य स्नान, निराहार, फलाहार भई शुक्लाष्टमी, कृष्णाष्टमी दुवै पक्षमा उपोषथ व्रत धारण गरी मन, वचन र शरीरले श्रीत्रिरत्नको स्मरण गरी तपोव्रत बस्न थालिन्। यसरी निश्चय गरी व्रत बसेकाले श्री खगानना गुह्येश्वरी देवी प्रशन्न भई प्रत्यक्ष दर्शन दिई पार्वतीलाई आफ्नो चरण कमलोदक अमृत धाराले गुह्याभिषेक गरी आफ्नो वासस्थानमा गुप्तरुपले पार्वतीलाई छोपी राख्न लगाए। कैलाशमा बस्ने महादेवलाई अचानक आफ्नी स्नेही पत्नीको संम्भना आई आफूले तथा

आफ्ना गणहरु नन्दि, भृङ्गि, शीतांग, भूत, प्रेत, पिशाश्च आदिले समेत पार्वतीलाई भेट्न असफल भएपछि कुन देवताको तपस्या गरे पार्वतीको मुख हेर्न पाउँला भनेर महादेवले विलाप गर्न थाले। आखिरमा महादेव गुह्येश्वरीको आज्ञानुसार शान्ततीर्थमा स्नान गरी आएर वालुवाको चैत्य बनाई छत्र, ध्वज, पुष्प, धूप, दीप, नैवैद्य, फलफूल, दक्षिणाको साथै पञ्चामृत अर्पण गरी पंचेन्द्रिय (राग, द्वेष, लोभ, मोह, माया) लाई जिति केवल त्रिरत्नको भक्तिभाव गरी षडक्षरीमन्त्र र रुद्राक्ष धारण गरी वाह्र वर्ष सम्म कठोर तपस्या गर्न थाले । उनको एकचित्त तपस्याले श्री गुह्येश्वरी देवी प्रसन्न भई महादेवलाई आफूले गुप्तरुपमा छोपीराखेकी पार्वतीको दर्शन गराइदिइन्। यसरी शान्ततीर्थमा उपोपथ व्रत बसी श्री गुह्येश्वरी खगाननाको शरणमा आई भक्तिभाव गरेकाले महादेव र पार्वतीको मिलन भई उद्धार हुन गयो ।[८]

**२.३. शान्ततीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :**

यस तीर्थमा उपोपथव्रत बस्दा चैत्य, पीठ, नागराज, दिग्पाल पूजाको लागि आवश्यक पूजा सामग्रीहरु निम्नानुसार छन्-रजत कुण्डपुष्प (नेवारी द्वाफोस्वाँ), चाँदीको दृष्टि, छत्र, सुवर्णधातु, श्री खण्डधूप, दक्षिणा-हिरारत्न, भोग सेतो तील तीर्थ पालं-तुलसी ।[९]

**२.४. शान्ततीर्थ व्रतफल :**

यस तीर्थमा स्नान, दान, पाठ पूजादि, व्रत बसेको पुण्य सय ओटी कन्या दान गरेको तुल्य फल प्राप्त हुन्छ ।[१०]

## ३. शंकरतीर्थ (शंखमूल)

**३.१. परिचय :**

ललितपुरको शंखमूलमा अवस्थित शंकरतीर्थ वागमती, मणिरोहिणी र रुद्रधाराको संगम स्वरुप त्रिवेणी तीर्थ हो । यो तीर्थ सात फणालेसंयुक्त श्वेतवर्ण शंखपाल नागराजको वासस्थानको साथै चामुण्डा देवी (क्वाछें

महालक्ष्मी)को प्रसिद्ध पीठ स्थल हो। यहाँ विशेष गरी नवग्रन्थको **दशभूमिश्वर सूत्रः** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ । यहाँलाग्ने मेला आश्विन शुक्ल तृतीया वृहस्पतिवार तुलासंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा उपद्रव शान्त भएर जान्छ ।[११]

## ३.२. शंकरतीर्थसंग सम्वन्धित व्रतकथा :

तीर्थव्रत कथा अनुसार एक वखत अनेक फलफूलले परिपूर्ण भएको बगैंचामा बोधिसत्त्व अवतार लिएका एकजना कपिलाक्षे (धर्म कुवलाक्ष) नाम गरेको एक जना बाँदर प्रत्येक दिन स्नान गरी त्रिरत्नको स्मरण गरी बोधिव्रत धारण गरी बस्दथे । एकदिन एकजना लोभी ब्राम्हण आफ्नो गाईहरुको खोजमा उक्त बगैंचा भित्र पसेर फलफूल लिएको बेलामा ठूलो हिलोको खाँडलमा पुरिए । मद्दतको लागि कराउँदा त्यहाँ बसेको बाँदरले सुनी ब्राम्हणलाई आफ्नो काँधमा बोकी बाहिर ल्याई उद्धार गर्यो । तर लोभी ब्राम्हणले आफूलाई बचाउने सुति राखेको बाँदरलाई मारी उसको मासु खान खोज्न थाल्यो । तर बाँदरले यो कुरा थाहा पाएतापनि उनी माथि करुणा राखी ब्राम्हणलाई उनको घरसम्म पुऱ्याई दियो । केही महिनापछि आफूले गरेको पापकर्मले ब्राम्हणलाई कुष्ठरोगले सतायो । त्यहाँको राजाको अर्ती सुनी ब्राम्हणले आफ्नो कुष्ठरोग निवारणका लागि श्री स्वयम्भूको दर्शन गरी शंकर तीर्थमा आइपुगे । शंकर तीर्थमा नित्य स्नान गरी चैत्य पूजा र त्रिरत्नको स्मरण गरी उनी त्यहाँ बस्न थाले । फलस्वरुप उनको संपूर्ण पाप नप्ट भई उनको शरीरमा लागेको कुष्ठरोग निवारण हुँदै दिव्य देह प्राप्त भयो । दैव संजोगले उनको मृत्यु त्यही तीर्थमा भएपछि तीर्थव्रत बसेको पुण्यको प्रभावले उनको जन्म स्वर्गमा कपिलदेवपुत्रको रुपमा भयो ।[१२]

## ३.३. शंकरतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :

यस शंकर तीर्थमा व्रत बस्दा चैत्य, नागराज, पीठ र दिग्पाल पूजाको लागि चाहिने आवश्यक पूजा सामाग्रीहरु निम्नानुसार छन्-लवंनिफोस्वाँ,

चाँदीको चन्द्रमा, दही, शंख, सेतो चामल, सेतो कपडा, कपूर, कपास, सेतो तील, रजत कुण्डपुष्प (नेवारी :द्वाफोस्वाँ) चाँदीको दृष्टि, छत्र, धूप, कुंकुम, दक्षिणा-लावरत्न वा पन्ना, भोग-सेतो तील ।[१३]

३.४. **शंकरतीर्थ व्रतफल** :

यस तीर्थमा स्नान, दान पूजा, पाठ, व्रत गरेको पुण्य एकसय जना हात्ती दान गरेको तुल्य फल प्राप्त हुन्छ ।[१४]

## ४. राजतीर्थ (धंतिल)

४.१. **परिचय** :

राजतीर्थ अष्टमी व्रत धारण गर्न जाने द्वादशतीर्थ मध्ये एक महत्त्वपूर्ण मानिन्छ । त्रिपुरेश्वरमा अवस्थित यो राजतीर्थ वागमती र राजमंजरी दुईनदीको संगम तीर्थस्थल हो । यो तीर्थ एघारफणालेयुक्त श्वेतवर्ण सूरुप नागराजको निवासस्थान र वाराही (पचली भैरव) को प्रसिद्ध पीठ स्थल हो । यहाँ विशेष गरी नवग्रन्थको **समाधिराज सूत्र** : र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ । यस तीर्थमा लाग्ने मेला कार्तिक शुक्ल तृतीया शुक्रवार बिच्छसंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरे निरोगी भई राज्यभोग गर्न पाइन्छ ।[१५]

४.२. **राजतीर्थ संग सम्वन्धित व्रतकथा** :

द्वादशतीर्थव्रत महात्म्य अनुसार परापूर्वकालमा पाँचाल देशको वन्धुमती नगरमा बल भन्ने एकजना कर्णसार्थवाह महाजन आफ्नो श्रीमती वर्णलक्ष्मीसंग सुखपूर्वक जीवन विताइरहेका थिए । केही समय पछि महाजन व्यापारको सिलसिलामा आफ्नो गर्भवती श्रीमतीलाई छोडी विदेशतीर लागे । महाजन गए पछि घरको धनसम्पति सबै चोरी र आगोले नष्ट भयो जस्ले गर्दा वर्णलक्ष्मी महाजननीले धेरै दु:ख कष्ट भोग्नु पऱ्यो । समयपुग्ने बित्तिकै वर्णलक्ष्मीले अठार अलक्षणले युक्त पुत्र प्राप्त गरिन् जस्लाई कालपुरुष भन्ने नामकरण भयो । उता व्यापार गर्न जाने महाजनको पनि सबै धनद्रव्य समुद्रमा खसी

नष्ट भयो । कालपुरुष पाँचवर्षको भएपछि एकजना उपकारी मानिसको सल्लाह अनुसार वर्णलक्ष्मीले छोरालाई पापमोचनका लागि उत्तरदिशातर्फ राजमंजरी र वागमतीको संगम तीर्थ राजतीर्थ दर्शन गर्न पठाए। कालपुरुष नेपाल मण्डलमा पुगी श्री स्वयम्भू भगवान र श्री गुह्येश्वरी खगानना देवीलाई प्रणाम गरी राजतीर्थमा नित्य स्नान गरी वालुवाको चैत्यमा पंचोपचार पूजा जप, तप, ध्यान र षड्क्षरी मन्त्र धारण गरी बसे । कालपुरुषले उक्त तीर्थमा आफूलाई दु:ख दिने सबैलाई आफ्नो दासी बनाउन सकुन् भनी इच्छा राखी व्रत बसेका थिए । तीर्थव्रत बसेको प्रभावबाट कालपुरुषलाई आफ्नो शरीरको सबै अंग लक्षणले पूर्ण भई दिव्यदेह प्राप्त भयो । छोराले व्रत बसेको प्रभावबाट बलमहाजनलाई पनि गुमेको सबै धनसम्पति पुन: प्राप्त भयो । यसपछि उनी घर फर्किए । घरमा आफ्नो श्रीमतीबाट सबै कुरा सुनी बलमहाजन राजतीर्थ पुगी आफ्नो राम्रो देह भएको छोरालाई घर फर्काए । कालपुरुषले आफ्नो राज्यको अधिपति हुनाको लागि पुनर्वार राजतीर्थमा गएर वालुवाको चैत्य बनाई पंचोपचार पूजा, अर्ध, जप, तप, ध्यान, स्तोत्र आदि गरी व्रत बस्न थाले। त्यसै समयमा उक्त देशको राजा अकस्मात् मृत्यु भएकोले त्यसबेलाको नियम बमोजिम हस्तिरत्न द्वारा कालपुरुषलाई नै सुरुप राजाको नामाकरण गरी त्यसदेशको राजा घोषित गरे। यसरी राजतीर्थमा त्रिरत्नको स्मरण गरी व्रत तपस्या गरेको पुण्य फलले सुन्दरदेह प्राप्त गर्नुको साथै सबैलाई आफ्नो अधिनमा राखी राज्यभोग गर्ने इच्छा पनि पूर्ण हुन गयो ।[१६]

## ४.३. राजतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामग्री :

यस राजतीर्थमा व्रतधारण गरी चैत्य, पीठ, नागराज, दिग्पालको पूजाको लागि आवश्यक पूजा सामग्रीहरु निम्नानुसार छन् - रजत कुण्डपुष्प (नेवारी :द्वाफोस्वाँ) चाँदीको दृष्टि, सुवर्णधातु, नागधूप शिल्हाय, दक्षिणा-माणिकरत्न भोग-पुवाकि अन्न, तीर्थपाल-तुलसी फूल, [१७]

### ४.४. राजतीर्थ व्रतफल :

यो तीर्थमा स्नान, दान, व्रत, पूजा आदि गरेको पुण्य एक सय घोडा दान गरेको तुल्य प्राप्त हुन्छ ।[१८]

## ५. मनोरथतीर्थ (खुसी ख्य)

### ५.१. परिचय :

काठमाडौंको उत्तरतर्फ टोखामा अवस्थित मनोरथतीर्थ केशावती र विमलावती नदीहरुको संगम तीर्थस्थल हो । यो तीर्थ तेहृफणाले युक्त पंचरगी चित्र विचित्र वर्णको कुलिक नागराजको निवासस्थान र मनमती देवी (इन्द्राणी) को प्रसिद्ध पीठ पनि विद्यमान छ । यहाँ विशेष गरी नवग्रन्थको **ललितविस्तर** र **आर्य नाम संगीतिको स्तोत्र** पाठ गरिन्छ । यो तीर्थमा लाग्ने मेला मंसीर शुक्ल पंचमी शनिवार धनु संक्रान्तिको दिनमा विधिविधानपूर्वक स्नान गरेको खण्डमा वस्त्र आदि लाभ हुन्छ ।[१९] तीर्थको नामबाटै यो तीर्थ सेवा गरेमा आफ्नो मनोकामना पूराहुने लक्षित हुन्छ ।

### ५.२. मनोरथतीर्थ संग संम्वन्धित व्रतकथा :

परापूर्वकालमा पांचाल देशमा राज्य गर्ने एकजना राजाले अनेक जीवजन्तुहरुलाई मार्दै पशुभक्ष्य जीवन बिताई रहेका थिए । एकदिन अचानक उनी मरेपछि आफूले जीवजन्तुलाई मारेको कर्मभोगले हरिण भएर जन्म लिए । एकदिन उनलाई लुव्धक नाम गरेको व्याधाको वाण लाग्यो । उनी मरणावस्थामा पुगे अनि मनोरथ तीर्थमा आएर तीर्थको पानी पिएर तीर्थराजलाई अर्को जन्ममा मलाई मार्ने व्याधालाई मार्न सक्ने वरदान मागी तीर्थ मै प्राण त्याग गरे । केही समय पछि व्याधाको पनि मृत्यु भयो । त्यसपछि अर्को जन्ममा व्याधा बाघको रुपमा र हरिण बराह (वन्देल) को रुपमा त्यही जंगलमा भयो । दुवै प्राणी ठूलो भएपछि बाघ र बन्देलको बीचमा एकले अर्कोलाई मार्न ठूलो संघर्ष भयो । संघर्ष गर्दा गर्दै आखिरमा दुवै जना मरणावस्था पुगेपछि मनोरथतीर्थमा आएर तीर्थको पानी खाएर दुवैले प्राण

त्याग गरे। यसरी आफ्नो आकांक्षा पूर्ण गरी तीर्थमा प्राण त्याग गरेकोले दुवैजना एक तीर्थिक र अर्को देवपुत्र भई स्वर्गमा आनन्दपूर्वक रहन थाले। यसरी स्वर्गलोकमा ठूलो पदवी हासिल गर्न पाएको कुरा इन्द्रले बुझ्दा मर्त्यमण्डल नेपालको मनोरथतीर्थको महत्त्वबारे जानकारी हुन पुग्यो। त्यसपछि इन्द्र पनि स्वर्गबाट मर्त्यलोक लाएर मनोरथ तीर्थ दर्शन गरे। त्यसै समयमा त्यहाँ नित्य स्नान गरी स्वर्गभुवनको देवराज इन्द्रलाई आफ्नो स्वामीको रुपमा पाउन कामना गरी बसेकी एउटी स्त्रीले इन्द्रलाई देखिन्। दुवैको मायाप्रीति भई विवाह भयो। यसरी बस्दाबस्दै एकदिन इन्द्रदेवलाई स्वर्गलोकको संम्झना आई आफ्नो स्त्रीलाई मनोरथतीर्थमा श्रीत्रिरत्नको भजन, पूजापाठ गरी बस पछि तिमी इद्रायणी देवी मनमैंजू (मनमाजू) को रुपमा सिद्ध हुनेछ भनेर आश्वासन दिएर इन्द्रलोक प्रस्थान गरे। तीर्थव्रत बसेको प्रभावले इन्द्रको शक्ति इन्द्रायणी वा मनमाजू भनी प्रख्यात भई अद्यापी स्थिर भएको विश्वास गरिन्छ। मानिसहरुले मनोरथ तीर्थमा स्नान गरी तीर्थसेवा र मनमाजूको भक्ति गरेको खण्डमा अवश्यपनि आफ्नो मनोरथ पूर्ण भई सिद्धि प्राप्त हुनेछ भन्ने श्री शाक्यमुनिले आज्ञा भएको उल्लेख छ।[२०]

## ५.३. मनोरथतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :

यस मनोरथतीर्थमा व्रत धारण गर्दाचैत्य, नागरा पीठ र दिग्पाल पूजाका लागि आवश्यक पूजा सामग्रीहरु निम्नानुसार छन् - उपोस्वाँ, तामाको कमंडलू, रजत कुण्डपुष्प (द्वाफोस्वाँ) चाँदीको दृष्टि, फलामधातु, दक्षिणा-कर्केतनरत्न, भोग-साध्य, तीर्थपालं-गोमुत्र।[२१]

## ५.४. मनोरथ व्रतफल :

यो तीर्थमा स्नान, दान, पाठ, पूजादि व्रत बसेको पुण्यफल सय वटा रथ दान गरेको तुल्य फल प्राप्त हुन्छ।[२२]

## ६. निर्मलतीर्थ (विलास)

### ६.१. परिचय :

निर्मलतीर्थ केशावती (विष्णुमती) र कुसुमावती नदीको संगम तीर्थस्थल हो । यो तीर्थ काठमाडौं उपत्यकाको पश्चिमतर्फ श्रीस्वयम्भूस्तूपको गोपूच्छपर्वत र विजुयश्वरी मन्दिरको मुनि अवस्थित छ। यो तीर्थ पञ्चफणाले युक्त पीतवर्ण (पहेंलो) उपलाल (पलाल) नागराजको वासस्थान हो र यहाँ शोभा भगवती (लुती इन्द्रायणी अजीमा) को प्रसिद्ध पीठ रहेको छ । यस तीर्थमा विशेषगरी नवग्रन्थको **सद्धर्मपुण्डरीक सूत्र** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ। यो तीर्थमा लाग्ने मेला पौषशुक्ल अष्टमी आदित्यबार मकर संक्रान्तिका दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा पाप नाश हुन्छ ।[२३] साथै, यहाँ स्नान गरी तपस्या, पूजा, पाठ गरेको खण्डमा निर्मल देह प्राप्त भई अष्टसिद्धि प्राप्त हुन्छ ।[२४]

### ६.२. निर्मलतीर्थसंग सम्वन्धित व्रतकथा :

यस तीर्थव्रत कथा अनुसार परापूर्वकालमा एकजना पंजाबका बज्रपाद नाम गरेको पण्डित गणित, तन्त्र चतुषष्टि लिपि विद्या शास्त्रमा निपुण थिए, तर उनले गरेका जुनसुकै कार्यमा पनि यश लाभ नभई झगडा मात्र भएर अपमान, अपजस मात्रै प्राप्त हुने गर्दथ्यो। यसरी अपजश पण्डितको रुपमा रही धेरै दु:ख र ताप सहिरहनु पर्थ्यो । यसले गर्दा अपजस पण्डित निकै अपशोच मानी तन्त्र, मन्त्र, गणित र चतुषष्टि लिपिमा युक्त महाविद्यावन भएर पनि यसको प्रयोजन केही भएन भनेर यस्तो विवेकहीन देशमा नवसी अनेक देश विदेश घुमी नेपाल मण्डलमा आइपुगे । नेपालको श्रीस्वयम्भू ज्योतिरुपलाई अष्टाङ्ग प्रणाम गरी निर्मल तीर्थमा आएर तीर्थसेवा गरी अष्टसिद्धि फल प्राप्त गर्ने विचार गरे । यसरी बज्रपाद ब्राम्हणले आफ्नो इच्छा अनुसार बालुवाको चैत्य बनाई त्रिरत्न स्मरण गरी नागपूजा, जप, तप, ध्यान गरी नित्य पीपलको पातमा प्रज्ञापारमिताको मन्त्र लेखेर तीर्थमा अर्पण

गरी श्री विद्याधरी देवीको मन्त्र स्मरण गरी कर्णद्धिपमा तपस्या गरि बसे। यसरी ६ वर्ष सम्म ठूलो दु:खकष्ट भोगी तपस्या गरेको देखेर श्री विद्याधरी देवी प्रसन्न भएर पण्डितको अगाडि प्रकट भइन्। अकस्मात् आफ्नो अगाडि श्री परमेश्वर विघाधरी देवीको दिव्य रुप देखेर पण्डितले जप, तप, र मन्त्र उच्चारण गरी प्रदक्षिणा गरेर हे परमेश्वरी, हे माता !! हे योगिनी !! हे वुद्धजननी !! हे प्रज्ञापारमिता !! हे गुह्यमाता !! भनी संबोधन गरेर कृतार्थ भए। देवी माताले वज्रपादलाई उनले इच्छाएको अपजस नास गरी अष्टसिद्धि फल लाभ हुने वरदान दिइन्। वज्रपाद पण्डितले देवीको आज्ञानुसार आफ्नो शास्त्रको गुण, ज्ञान, प्रकाश द्वारा संपूर्ण लोकजनलाई अनेक तन्त्र, मन्त्र, शास्त्र सिकाएर त्रिरत्नको सेवा गरी बस्ने अठोट लिई आफ्नो देशमा फर्केर गए। आफ्नो देशमा पुगेपछि त्यहाँका मानिसहरुले उनीसित क्षमा मागी उनको गुण संझी अनेक कोसेली सिरपा दिएर मान गरे। यसरी वज्रपाद पण्डितले निर्मलतीर्थ सेवा गरी व्रत, जप, तप, गरेकोले यश र अप्टसिद्धि लाभ भई उद्धार भएका थिए।[२५]

**६.३. निर्मलतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :**

यस तीर्थमा व्रत बस्दा चैत्य, नागराज, पीठ र दिग्पाल पूजाको लागि आवश्यक विशेप पूजा सामाग्रीहरु निम्नानुसार छन्-

कलिहस्वाँ, सुवर्ण औंठी, रजत कुण्डपुप्प (द्वाफोस्वाँ), चाँदीको द्दप्टि, सुवर्ण धातु, धूप, सुवर्ण दक्षिणा, सुवर्ण चक्कि, तीर्थ पालंगोमय।[२६]

**६.४. निर्मलतीर्थ व्रतफल :**

यो निर्मलतीर्थमा स्नान, दान व्रत पूजा, पाठ बसेको पुण्य घर, जग्गा दान दिएको तुल्य फल प्राप्त हुन्छ।[२७]

## ७. निधानतीर्थ (कंगुखुसी)

**७.१. परिचय :**

निधानतीर्थ केशावती र सुवर्णावती नदीहरुको संगम तीर्थस्थल हो। यो

तीर्थ बालाजुमा अवस्थित छ। यो तीर्थ पञ्चफणालेयुक्त नन्द नागराज र सप्त (सात)फणाले युक्त उपनन्द नागिनीको वासस्थान र कंग अजिमा (कंग चामुण्डा) को प्रसिद्ध पीठ अवस्थित छ। यहाँ विशेषगरी नवग्रन्थको **तथागत गुह्यक (गुह्यसमाजतन्त्र) सूत्रः** र **आर्यनामसंगीति सूत्र** पाठ गरिन्छ। यो तीर्थमा लाग्ने मेला माघ कृष्णासप्तमी आदित्यबार कुम्भसंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा दरिद्रय नाश हुन्छ।[२८]

**७.२. निधानतीर्थसंग सम्वन्धित व्रतकथा :**

नेपाल द्वादश तीर्थ महात्म अनुसार पंचचूड भन्ने पांचाल देशका राजाको दिनचूड, रत्नचूड र ज्ञानचूड नाम गरेका तीन जना छोराहरुलाई अंशवण्डा गरी बेग्लाबैग्लै बस्न लगाए। जेठो छोरा दिनचूड कुसंगत र कुकर्मले गर्दा उनको सबै धनसम्पति नाश भयो। आखिरमा धेरै दुःख कष्ट भोगी नेपाल मण्डलको स्वयम्भू चैत्यको दर्शन पूजन गरी निधानतीर्थम आइपुगे। धेरै भोकाएको र तिर्खाएको हुनाले उनले त्यहाँ बगेर आएका माछाहरु काँचै खान थालेको देखेर लोकजनले उनलाई निधान तीर्थको महत्त्व दर्शाई यहाँ स्नान गरी तीर्थ सेवा गर्ने उपदेश दिए। राजकुमार दिनचूडले पनि तीर्थमा स्नान गरी काय, वाक्, चित्त (त्रिकाय) शुद्ध गरी त्रिरत्न भाव गरी आफ्नो दरिद्रता हटाई दिनु हुन प्रार्थना गर्न थाले। दिनचूडको तपस्याले तीर्थराज खुसी भई उनलाई आजको रात्री पहरमा आगो बलेको जस्तै ज्वाला आएको ठाउँमा चिन्ह राखी भोलि विहानी उक्त ठाउँबाट धन खनेर लिनु भन्ने वरदान दिए। तीर्थराजले भने जस्तै गरेपछि उनलाई धेरै धनसम्पति प्राप्त भयो। यसरी आफ्नो मनोरथ पूर्ण गरेर निधानतीर्थ मै बसी त्रिरत्न र तीर्थसेवा गर्दै आफूलाई प्राप्त भएको धन दानप्रदान गरी वस्न थाले। पछि त्यही तीर्थमै उनको मृत्यु भएपछि धनसम्पति अन्न आदि परिपूर्ण भएको कुल नन्द र उपनन्द नागराजको वंशमा नागपुत्र भई उनको जन्म भयो। तीर्थसेवा गरेको हुनाले उनीमा पूर्वानुस्मृति हुँदा पुनः निधानतीर्थ मै त्रिरत्न र तीर्थराजको सेवा गरी बस्न थाले। यस्को पुण्य प्रभावले उनी मोक्ष भई स्वर्गमा आनन्दपूर्वक बसे।

**७.३. निधानतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :**

यो निधानतीर्थमा व्रत बस्दा चैत्य, पीठ, नागराज र दिग्पाल पूजा गर्नको लागि आवश्यक विशेप पूजा सामग्रीहरु निम्नानुसार छन् -

सिन्हायस्वाँ, पुस्तक, रजत कुण्डपुष्प (द्वाफोस्वाँ), चाँदीको दृष्टि, नागछत्र, सुवर्ण र चाँदीको कुंकम, दक्षिणा-माणिकरत्न, तीर्थपालं-गाईको दूध ।[३०]

**७.४. निधानतीर्थ व्रतफल :**

यो तीर्थमा स्नान गरी व्रत, पूजा, जप, तप पाठ गरेमा यस्को पुण्य जग्गा, धनसम्पति दान गरेको तुल्य प्राप्त हुनेछ ।[३१]

## ८. ज्ञानतीर्थ (कन्हखुसी)

**८.१. परिचय :**

कालिमाटीमा अवस्थित ज्ञानतीर्थ केशावती र पापनाशिनी दुई नदीको दोभान तीर्थस्थल हो । यो तीर्थ नौं फणाले युक्त भएको श्वेतवर्णको वासुकी नागराजको वासस्थान हो । यहाँ टंकेश्वरी नीलवाराहीको प्रसिद्ध पीठ रहेको छ । यहाँ विशेप गरी नवग्रन्थको **ललिविस्तर सूत्रः** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ । यस तीर्थमा लाग्ने मेला फागुण शुक्ल अष्टमी शनिवार मीनसंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा सुखफल भोगगर्न पाइन्छ ।[३२] यस तीर्थमा स्नान, दान जप, तप गरी त्रिरत्न भक्तिभाव गरेर शास्त्रोक्त प्रमाण अनुसार तीर्थ सेवा गरेमा अज्ञान नाश भई बोधिज्ञान प्राप्त हुन्छ ।[३३]

**८.२. ज्ञानतीर्थ संग सम्वन्धित व्रतकथा :**

तीर्थव्रत कथा अनुसार परापूर्वकालमा उत्तरपति कर्पुरवती भन्ने देशका राजा अज्ञानसिन्धु अत्यन्त मूर्ख र बुद्धिहीन भएकोले देशको शासनाधिकार सबै मन्त्रिहरुको हातमा पर्न गयो । आफ्नो रानीले समेत उनलाई धिक्कारेको हुनाले अत्यन्त दु:ख र ताप भएर राजदरवारबाट निस्कि नेपालमण्डलमा आएर श्री स्वयम्भू ज्योतिको दर्शन र पूजा गरी ज्ञानतीर्थमा आइपुगे ।

ज्ञानतीर्थमा उनले बालुवाको चैत्य बनाएर पंचोपचार पूजा, जप, तप ध्यान गरी त्रिरत्न र तीर्थसेवा गरी बसे। यसरी बस्दाबस्दै एकदिन तीर्थराज खुसी भएर उनलाई अज्ञान नाश हुने वरदान दिए। उनले पहिलेको जन्ममा केही दानधर्म नगरी शास्त्रलाई असंख्य हेला गरेको हुनाले अहिलेको जन्ममा केही नजान्ने मूर्ख भई दुखः कष्ट भोग्नु परेको थियो । यस तीर्थमा आएर तीर्थसेवा गरेको पुण्यको प्रभावले उनको अज्ञानता नाश भयो। साथै उनको अर्को जन्म अज्ञानशोधन नाम गरेको सुन्दर बालकको रुपमा मन्त्रिको कुलमा भयो। अज्ञानशोधन ठूलो भएर सबै शास्त्रको ज्ञाता भएपछि सबैको सल्लाह अनुसार उनलाई नै राजा बनाई राजदरवारमा राखे । तर उनमा पूर्वानुस्मृति भएको हुनाले राज्यभार संपूर्ण त्यागगरी ज्ञानतीर्थमा आएर पंचोपचार पूजा जप, तप, ध्यान गरी अर्धको साथै पितृतर्पण गरी तीर्थसेवा गरेर बस्न थाले। यस्ले गर्दा अज्ञानशोधनको साथै प्रज्ञालोकको पनि अज्ञान नाश भई बोधिज्ञान प्राप्त गरी स्वर्गमा निवास गर्न पाए ।[३४]

**८.३. ज्ञानतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :**

यस ज्ञानतीर्थमा व्रस बस्दा चैत्यपूजा , पीठ पूजा नागराजपूजा र दिग्पाल पूजा गर्न आवश्यक विशेष पूजा सामाग्रीहरु निम्नानुसार छन् - रजत कुण्डपुष्प (द्वाफोस्वाँ), चाँदीको दृष्टि, चाँदीको धातु, सेतो वस्त्र, अन्न, आख्य, कपूस्वाँ, नागधूप, केशर, दक्षिणा-पुष्पराज, भोग-गाईको दूध ।[३५]

**८.४. ज्ञानतीर्थ व्रतफल :**

यहाँ स्नान गरी व्रत, दान, जप, तप ध्यान, पाठ पूजादि गरेको पुण्य गौदान दिएको तुल्य फल प्राप्त हुन्छ ।[३६]

## ९. चिन्तामणीतीर्थ (पचली)

**९.१. परिचय :**

टेकुदोभानमा अवस्थित चिन्तामणीतीर्थ वागमती र केशावतीको दुई नदीको संगम पवित्र तीर्थस्थल हो। यो तीर्थस्थलमा नौ फणाले युक्त श्वेतवर्ण

वरुण नागराज निवास गर्दछन्। यहाँ पचली भैरवीको प्रसिद्ध पीठ रहेको छ। यस तीर्थमा विशेष गरी नवग्रन्थको **सुवर्णप्रभास** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ। यस तीर्थमा लाग्ने मेला चैत्र शुक्ल दशमी सोमबार मेषसंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा दीर्घायू भई धन धान्यमा वृद्धि हुन्छ।[३७] यस तीर्थमा स्नान, जप, तप आदि गरेर भिक्षु अतिथिगणलाई दानधर्म गरेमा बोधिज्ञान प्राप्त भई कोटिधन संयुक्तको चिन्तामणि रत्न लाभ हुन्छ।[३८]

**९.२. चिन्तामणीतीर्थ संग सम्वन्धित व्रतकथा :**

यो तीर्थको व्रत कथानुसार परापूर्वकालमा बासव नगरमा कोटिधन द्रव्यले परिपूर्ण भएको कोटिकर्ण भन्ने एकजना छोरा थियो। कोटिकर्ण ठूलो भएपछि आफ्नो पराक्रमद्वारा धन कमाउन वनिया साथीहरुसंग व्यापार गर्न उत्तरापंथ दिशातिर लागे। अनेक नदी ग्राम नाघेर ब्रह्मपुत्र नदी पार गरी कोटिकर्ण सार्थवाहले अनेक मालसामान, हेरापन्ना बहुमुल्य वस्तुहरु खरिद विक्री गरी धन कमाउन थाले। त्यहाँबाट फर्की फेरी ब्रह्मपुत्र नदी तरेर जाँदाजाँदै संयोगवश मरुभूमिमा पुगेपछि ठूलो आँधिवेरी चली आफू वनिया साथीहरु संग विछोड भयो। कोटिकर्णका साथीहरु मात्र घर फर्केकोले उनका आमाबाबुले ठूलो विलाप गरी छोरा मरीसकेको विचार गरेर उनको जन्मपत्रिका (चिना) दाह संस्कार गरी पुत्रका नाममा बुद्धालय स्थापना गरे। यता कोटिकर्ण महाजन आफ्नो कर्मको प्रभावले यमलोक पुगे। यमलोकमा उनले अनेक दृश्यहरु देखे। उनले त्यहाँ पहिलेको जन्ममा आफूसंग भएको वस्तु र चिजबीजहरु आफूले मात्र खाएर आएको हुनाले अत्यन्त पानीको प्यास लागेका शुचि मुख प्रेत (पेट ठूलो मुख अत्यन्त सानो) को रुपमा आफ्नो आफ्नो कर्म भोग गरी रहेका दृश्य देख्यो। अर्को दृश्य उनले एकजना मानिसलाई रातको प्रहरमा चारजना अप्सराहरुले नानाप्रकारले सेवा तहल गरी सुखभोग गराए भने प्रभातकाल पछि उनलाई एउटा खम्बामा वाडी चारजना कुकुरहरुले रगताम्व गरी टोकेको देख्यो।

यो के कारणले भएको भन्दा उक्त व्यक्ति विहानै सबेरै उठेर अनेक देवीदेवता पूजा गर्दथ्यो भने दिउँसोतिर अनेक पशुहरुलाई मारी मासु वेच्ने व्यापार गर्दथ्यो। यसरी आफूले गरेको पापकर्मले गर्दा यमलोकमा अत्यन्त दुःखकष्ट भोग्नु परेको थियो। त्यसैले कर्मभोग गरिरहेका व्यक्तिहरुले कोटिकर्णलाई आफ्नो घर फर्कदा उनका परिवारहरुलाई उनीहरुको नाममा दानधर्म गरिदिनु हुन भनी दिनु भन्ने अनुरोध गरे। कोटिकर्ण त्यहाँबाट निस्की आफ्नो घरतिर फर्कदा उनलाई मरणतुल्य भएको विचार गरी उनको नाममा मन्दिर बनाईएकोले घर नफर्की दुई जना ब्राम्हणहरुको सल्लाह अनुसार गृद्धकूत पर्वतमा रहेको श्री स्वयम्भूको दर्शन, पूजन गरे। श्री स्वयम्भूको आज्ञानुसार उनी फेरि आफ्नो गाउँमा आई यमलोकमा कर्मभोग गरिरहेका मानिसहरुका परिवारलाई यमलोकमा आफूले देखेका सबै वृतान्त सुनाई उनीहरुको नाममा दानधर्म गराएर आफ्नो आमाबाबुको दर्शन गरेर चूडाकर्म प्रवज्याव्रत धारण गरी बागमती र केशावती दुई नदीको संगम स्थल चिन्तामणि तीर्थ सेवा गरी बसे। यसरी धेरै वर्षसम्म तीर्थसेवा र त्रिरत्नको स्मरण गरी पंचोपचार पूजा, जप, तप ध्यान गरेको पुण्यको प्रभावले कोटिकर्णलाई धेरै ठूलो कोटिधनद्रव्य प्राप्त भई बोधिज्ञान लाभ भएर तथागतका पुत्र बोधिसत्त्वको रुपमा बस्ने सौभाग्य प्राप्त भयो।[३९]

## ९.३. चिन्तामणीतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :

यस तीर्थमा व्रत बस्दा चैत्यपूजा, नागराजपूजा, पीठपूजा र दिग्पालपूजाको लागि आवश्यक विशेष पूजा सामग्रीहरु निम्नानुसार छन् -

रजत कुण्डपुष्प (द्वाफोस्वाँ), चाँदीको दृष्टि, रुमाल, धोटिवस्त्र, सुवर्णधातु, नागधूप, दक्षिणा-हेरारत्न, भोग आख्य, गुन्तुदान।[४०]

## ९.४. चिन्तामणीतीर्थ व्रतफल :

यस तीर्थमा स्नान, दान, व्रत, जप, तप ध्यान गरेको पुण्य एकसय जना कन्या दान गरेको तुल्य फल प्राप्त हुन्छ।[४१]

# १०. प्रमोदतीर्थ (दानिगा)

## १०.१. परिचय :

कीर्तिपुरतिर जाने बाटोमा पर्ने प्रमोदतीर्थ बागमती र रत्नावती दुई नदीहरुको संगम तीर्थ स्थल हो। यो तीर्थ सात फणाले युक्त भएको श्वेतवर्णको पद्मनागराजको निवासस्थान हो। यहाँ इन्द्राणीदेवीको प्रसिद्ध पीठ रहेको छ। यहाँ विशेप गरी **पंचरक्षा सूत्र, आर्यनामसंगीति स्तोत्र** र **अपरिमिता धारणी** पाठ गरिन्छ। यस तीर्थमा लाग्ने मेला एकादशी वृहस्पतिवार बृषसंक्रान्तिको दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा मायाप्रीति सुखफल भोग्न पाइन्छ।[४२]

यहाँ स्नान, व्रत, दान, तप गरेमा अप्टसिद्धि लाभ भई स्वर्ग, मर्त्य र पातालका सबैलाई आफ्नो वशमा राख्न सक्ने क्षमता प्राप्त हुन्छ।[४३]

## १०.२. प्रमोदतीर्थसंग सम्वन्धित व्रतकथा :

तीर्थव्रत कथा अनुसार एक समयमा कांपिल्ल नगरका एकजना तान्त्रिक पण्डित शास्त्र विधामा केही नजानेतापनि ताकताकले वा अन्दाजले बोल्ने साक्षात् ताकसीं पण्डित मात्र भएर प्रजाको साथै राजा भारदाहरुलाई समेत प्रभावपारी प्रशंसा पात्र भई बसीराखेका थिए। उनको प्रशंसा सुनी दक्षिण दिशाका काशीका एकजना तीर्थक उनीसंग वादविवाद गर्नको लागि नेपाल आए। राजाले ताकसीं पण्डितलाई बादविवादमा तीर्थकलाई नहराए र ाजाको बेइज्जती हुनेछ र यदी उनले तिर्थकलाई हराएको खण्डमा उनलाई पुरस्कार दिने वचन दिए। बादविवाद सुरु भएपछि तीर्थकले तान्त्रिक पण्डितलाई के गरे ठूलो हुन्छ, के उत्तम छ भनेर प्रश्न गरे। तान्त्रिक पण्डितले यो संसारमा ठूलो र उत्तम भनेको लोकाचार हो। यो कुरालाई तीर्थकले अस्वीकार गरी यो संसारमा सत् भनेको सत्यधर्म, तीर्थस्नान, त्रिरत्न पूजा, दान, दातव्य, जप, तप, भावभक्ति ठूलो भन्यो। पूनर्वार तान्त्रिकले यो संसारमा कस्ले धर्म गर्‍यो कस्ले पाप गर्‍यो भन्न सकिदैन, धर्म मात्र

भनेर कराउँदा आहार प्राप्त हुँदैन । कसैलाई चित्त नदुख्ने गरी लिनु तर कसैलाई प्रहार र हत्या नगर्नु, खाने, पिउने भनेको लोकमा चलेको जस्तै लोकाचार लाई पालन गर्दै हिंड्नु नै सबभन्दा ठूलो हुन्छ भनेर कुरा बतायो । यी कुरालाई अपराध ठानी तीर्थकले उनलाई खाने, लाउने नपाएता पनि एकाचित्त गरी श्री त्रिरत्न र तीर्थसेवा गरी अतिथिलाई सेवा, दानदातव्य गर्नु पर्छ भन्यो । दुवैको बादविवाद लम्बिएको हुनाले कुनै तीर्थमा गएर यस्को टुङ्गो लगाउने निर्णय गऱ्यो । दुवै जना प्रमोदतीर्थमा आए । त्यस तीर्थको महत्त्व र पवित्रताबारे तीर्थकले उनलाई संझाए । तर यस्को महत्त्वलाई अस्वीकार गरी तान्त्रिक पण्डितले यस तीर्थलाई अशुचि स्थान भनी यस्को पानीसम्म पनि छुनु हुँदैन भन्न वित्तिकै तान्त्रिकको शरीरमा काप्ने रोग लाग्यो र ऊ अचेत भयो । होस आएपछि तीर्थकले उनलाई यस तीर्थको महात्म्य र कथा सुनाए । उक्त कथा अनुसार एक समयमा एउटा दानासूर नामक राक्षस त्यहाँ आयो । कसैबाट बाधा विघ्न नपर्ने स्थिति सिर्जना गरी त्यस राक्षसले १२ वर्षसम्म घोर तपस्या गऱ्यो । उसको तपस्या देखि तीर्थर ाज खुसी भई उस्लाई कैलाश,वैकुण्ठ र ब्रह्माभूवन सहित स्वर्गलोक वसमा हुने वरदान दिए । सारा त्रिलोक एउटा राक्षसको हातमा परेपछि यस समस्याको समाधान गर्न ब्रह्मा, विष्णु, महेश्वर र इन्द्र श्री गुह्येश्वरी देवीकी शरणमा आए । श्री गुह्येश्वरी देवीको आज्ञा अनुसार देवताहरु सबैजना जेतवनमा आई भगवान् बुद्धलाई अष्टाङ्ग प्रणाम गरी आफ्नो समस्या समाधानको लागि अनुरोध गरे । बुद्धले आफ्नो ध्यानद्वारा रुद्राक्ष रुख उत्पन्न गराई त्यसबाट रुद्राक्ष माला बनाई श्रीमहारुद्र (महादेव) लाई रुद्राक्षमाला दिई सबै देवताहरुलाई प्रमोदतीर्थमा दानासूरले जस्तै तपस्या गर्न जाने आज्ञा दिनु भयो । त्यसपछि भगवान् बुद्धले दानासूरलाई बोलाउन पठाउदा पनि नआएकोले तीर्थराजको रुप धारण गरी दानासूरलाई बुद्धको विहारमा ल्याए । बुद्धले उनलाई बोधिसम्बरको उपदेश दिई प्रवज्या धारण गराई बोधिज्ञान र बोधिव्रत दिनुभयो । बुद्धको उपदेशले दानासूरको अहङ्कार

र क्रोध नाश भई पापदेहको सट्टा पुण्यदेहमा परिणत भयो । त्यसपछि दानासुर कलियुगमा जव मानिस अत्यन्त पापी हुन्छ त्यसबखत सबै लोकलाई बोधिज्ञान, व्रत उपदेश दिएर बुद्धमत चलाउने छु भनेर प्रतिज्ञा गर्दै प्रमोदतीर्थमै लीन भएर गए । त्यस्ले मानिसहरुले उक्त तीर्थमा अद्यापि दानासुर राक्षस निवास गरेको विश्वास गरी यस तीर्थलाई दैत्यतीर्थका रुपमा पनि मान्दछन् । यसरी प्रमोधतीर्थको महत्त्वबारे तीर्थक्ले तान्त्रिकलाई संझाएतापनि दुवैको छलफल जारी नै भई आखिरमा दुवैको मृत्यु त्यही तीर्थमा हुन गयो । तीर्थ मैं देहत्याग गरेको पुण्य प्रभावले दुवैजनाको जन्म स्वर्गलोकमा हुन पुग्यो ।[४४]

**१०.३. प्रमोदतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :**

यस तीर्थमा व्रत बस्दा चैत्यपूजा, नागराज पूजा, पीठ पूजा र दिग्पाल पूजाको लागि आवश्यक विशेष पूजा सामग्रीहरु निम्नानुसार छन् -

रजत कुण्डपुष्प (द्राफोस्वाँ), चाँदीको दृष्टि, चाँदीको धातु, नागधूप, छत्र, सुगन्ध, कपूर, दक्षिणा-पुष्पराज, तीर्थपालं-सेतोतील, ।[४५]

**१०.४. प्रमोदतीर्थ व्रतफल :**

यहाँ स्नान, दान, तप, जप, ध्यान, व्रत, पाठ, पुजादि गरेको पुण्य पुत्रपुत्री दान गरेको तुल्य फल प्राप्त हुन्छ ।[४६]

## ११. सुलक्षणतीर्थ (भाजंग)

**११.१. परिचय :**

चोभारमा अवस्थित सुलक्षणतीर्थ बागमती र चारुमती दुईनदीको संगम तीर्थस्थल हो । यो तीर्थ सातफणाले युक्त श्वेतवर्णको महापद्म नागराजको निवास स्थान हो । यहाँ बैष्शावीदेवीको प्रसिद्ध तीर्थस्थल रहेको छ । यस तीर्थमा व्रतवस्दा विशेप गरी **प्रत्यसरा स्तोत्र र आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ । यहाँ लाग्ने मेला जेप्ठशुक्ल द्वादशी बुधवार, मिथुन संक्रान्तिको

दिनमा विधिविधान अनुसार स्नान गरेको खण्डमा रुप राम्रो भई सुन्दर देह प्राप्त हुन्छ ।[४७] यसतीर्थमा एक्काइस दिनसम्म स्नान, व्रत, तप, ध्यान गरी त्रिरत्न र तीर्थ सेवा गरेको खण्डमा संपूर्ण अलक्षण नाश भई शुलक्षणले पूर्ण भई बोधिज्ञान प्राप्त हुन्छ ।[४८]

**११.२. सुलक्षणतीर्थ संग सम्वन्धित व्रतकथा :**

तीर्थव्रत कथा अनुसार परापूर्वकालमा कौसिक नदीतीरको कुसीद नगरमा सुलक्षण भन्ने राजा बडो पराक्रमका साथ शान्ति सुव्यवस्था गरी राज्य चलाई रहेका थिए । त्यस देशमा पंचमहापाप गरेको फलले एउटै लग्न एउटै बेलामा बत्तीस सुलक्षणले पूर्ण तीनजना कुपुत्रहरुको जन्म भयो । एकजना राजाको दोस्रो मन्त्रीको र तेस्रो महाजनको सन्तानहरुको रुपमा थियो । यसरी संयोगवश तीनजना अलक्षण सहितको कुपुत्रहरु जन्मेको प्रभावले देशमा अमंगल भई अनेक उपद्रव दुर्घटना महामारी भई असंख्य मानिसह मर्न थाल्यो । राजा, मन्त्रीको साथै महाजनको पनि असंख्य धनद्रव्य, अन्न नास भएर गए । यो देखेर महाजनले दुई तीन जना मानिसहरुलाई छोरालाई जंगलमा छोडेर आउने कुरा सिकाई ती मानिसहरुका साथमा आफ्नो छोरालाई भने व्यापारको बहाना गरी पठाए । जंगलमा पुगेपछि आफ्नो साथीहरुले आफूलाई छलेर गएको थाहापाई त्यहाँबाट विलाप गरी नेपालमण्डल आई श्री स्वयम्भूनाथको दर्शन गरी सुलक्षण तीर्थ स्थलमा आईपुगे । त्यहाँ उनले नित्यस्नान, चैत्यपूजा, जप, तपद्वारा पापमोचन गरी तीर्थराजबाट आफ्नो शरीरको संपूर्ण बत्तीस अलक्षण हटाई दिव्यदेह परिणत गरि दिनु हुन वर दान प्राप्त गरे । आफ्नो देहलाई सुलक्षणले पूर्ण गरी तीर्थराजको आज्ञानुसार उनी त्यहाँबाट आफ्नो देशमा आई राजा र मन्त्रीका दुई जना छोराहरुलाई सुलक्षणतीर्थमा नित्य स्नान, चैत्य पूजा, जप, तप, ध्यान गर्न सल्लाह दिए । उनको सल्लाहलाई मानि ती दुवै जना राजा र मन्त्रीका पुत्रहरु सुलक्षणतीर्थमा आएर नित्य स्नान, चैत्य पूजा, जप, तप, ध्यान आदि गरी आफ्नो आफ्नो शरीरको अलक्षण हटाई सुलक्षणले पूर्ण देह प्राप्त गरे । त्यसपछि राजा र

मन्त्रीका पुत्रहरु आफ्नो देशमा फर्की आनन्दले राज्यभोग गरी बसे । त्यसबेला देखि देशमा दुभिक्ष नाश भई शुभमंगल भई शुभिक्ष हुदैं गए ।[४९]

### ११.३. सुलक्षणतीर्थमा अष्टमीव्रत बस्दा आवश्यक पूजा सामाग्री :

यस तीर्थमा व्रत बस्दा चैत्य पूजा, नागराजपूजा, पीठ पूजा र दिग्पाल पूजाको लागि आवश्यक विशेष पूजा सामाग्रीहरु निम्नानुसार छन् ।

रजत कुण्डपुष्प (द्राफोस्वाँ), चाँदीको दृष्टि, छत्र, चाँदीको धातु, नागधूप, श्रीखण्ड, दक्षिणा-मोति, भोग लाजा (ताय्) गाईको दूध ।[५०]

### ११.४. सुलक्षणतीर्थ व्रतफल :

यस तीर्थमा स्नान, दान, व्रत, जप, तप, ध्यान, पाठ पूजादि गरेको पुण्य पुत्री र गोदान दिएको तुल्य फल प्राप्त हुन्छ ।[५१]

## १२. जयतीर्थ (नेखुहों)

### १२.१. परिचय :

जयतीर्थ चोभार नजिकै प्रभावती र बागमती दुई नदीको संगम तीर्थस्थल हो। यो तीर्थ सात फणालेयुक्त श्वेतवर्णको श्रीकान्ति नागराजको निवासस्थान हो । यहाँ नाम नभएको देवीको पीठ पनि रहेको छ । यहाँ व्रत बस्दा विशेष गरी **करुणापुण्डरीक** र **आर्यनामसंगीति स्तोत्र** पाठ गरिन्छ । यो तीर्थमा लाग्ने मेला आषाढशुक्लको त्रयोदशी सोमवारको दिनमा विधिविधानुसार स्नान गरेको खण्डमा शत्रु नाश हुन्छ ।[५२]

### १२.२. जयतीर्थसंग सम्वन्धित व्रतकथा :

द्वादशतीर्थ महात्म्य अनुसार परापूर्व कालमा दानासुर दैत्य र उनकी पत्नी कान्ति दैत्यनी सन्तान नपाउँदा दुवैजना दिनरात झगडा गरिरहन्थ्यो । आफ्नो स्वामीको अहंकार कोप देखेर सहन नसकी दैत्यनी त्यहाँबाट निस्की यत्रतत्र घुम्न थालिन् । दैव संयोगवश उनी नेपाल मण्डलमा पुगी श्री स्वयम्भू र धर्मधातु वागीश्वरलाई प्रणाम गरी फुल्लोच (फुल्चोकी) डाँडामा

अवस्थित श्रीमहालक्ष्मी देवीलाई सन्तान प्राप्तीको लागि नित्य पंचोपचार पूजाको साथ तपस्या गरी बसिन् । दैत्यनीको पूजाभाव देखि अत्यन्त खुसी भई आफ्नो दिव्य स्वरुप धारण गरी श्री महालक्ष्मी वसुन्धरा देवी उनीको अगाडि प्रकट भईन् । दैत्यनीले देवीलाई अनेक नामले संबोधन गरी देवीकै चरणकमलमा आफ्नो रक्षार्थको लागि प्रार्थना गरिन् । देवीले उनलाई सन्तान हुने आश्वासन दिई आफ्नो दाहिने खुट्टालाई आसन गरिराखेको सुवर्ण कलशले तत्काल जलधारा बगाई प्रभावती नामको नदी सिर्जना गराई बागमती नदी सित संगम गराईन् । देवीको आज्ञाबमोजिम कान्तिदैत्यनीले बडो एकचित्त गरी उक्त तीर्थमा नित्य स्नान गरी त्रिरत्न र तीर्थ सेवा गरी जप, तप, ध्यान गरीन् । यस पुण्यको प्रभावबाट दानासुरदैत्यलाई आफ्नो पत्नीको संम्झना आई आफूमा भएको अभिमान, धमण्ड, क्रोध सबै त्याग गरी उक्त तीर्थस्थलमा आईपुगे । दुवै दैत्य दैत्यनीले त्रिरत्न तीर्थ पूजा गरी तीर्थराजलाई प्रणाम गरी परस्मर धर्मको कुरा गर्दै घर फर्के । केही समयपछि दैत्यनीको गर्भबाट एउटी बत्तीस लक्षणले युक्त अत्यन्त सुन्दरी पुत्रीले जन्म लिइन् जस्लाई प्रभावती गंगा भन्ने नामकरण गर्‍यो । यसरी सन्तान प्राप्त भई दैत्यपत्नीको जय हुँदै आएकोले उक्त तीर्थको नाम पनि जयतीर्थ भनेर प्रख्यात हुन गए ।

यस तीर्थमा नरसिंह सौदागर भन्ने राजकुमारले पनि तपस्या गरी आफूले नरमांस भक्ष गरेर प्राणी हिंसा गरेको पाप शान्त भई दिव्य स्वरुप प्राप्त भई मोक्ष पदवी समेत लाभ गर्‍यो ।[५३]

### १२.३. जयतीर्थमा व्रत बस्दा आवश्यक पूजा सामाग्री :

यस तीर्थमा व्रत बस्दा चैत्यपूजा , नागराजपूजा, पीठपूजा र दिग्पाल पूजा गर्नको लागि आवश्यक पूजा सामग्रीहरु निम्नानुसार छन् -

रजत कुण्डपुष्प (द्वाफोस्वाँ), चाँदीको दृष्टि, श्रीखण्ड, सुवर्ण धातु, धूप, कस्तुरी, दक्षिणा-मोतिरत्न भोग-सेतोतील, तीर्थपालं- व्या र श्रीफल (त:सी)[५४]

